# नेपालका
# विभिन्न जाति र लोकगीत

एक परिचय






लेखक तथा सकलनकर्ता

आर्० डी०

र

एल्० एल्०

नेपालका

विभिन्न जाति र लोकगीत

एक परिचय

मार्ग २०२३ साल

पहिलो खेप २००० प्रति

 मूल्य : ३/-


प्रकाशक :

यूनेस्कोका निमित्त नेपाल राष्ट्रिय आयोगका तर्फबाट

जगदम्बा प्रकाशन

श्रीदरबारटोल, ललितपुर



मुद्रक :

श्री माहेश्वरी प्रेस,

भाट की गली ( गोलघर ), वाराणसी-१

श्री ५ को सरकार
शिक्षामन्त्रालय
यूनेस्कोका निमित्त नेपाल राष्ट्रिय आयोग
सिहदरबार
काठमाडौं, नेपाल

पत्र सख्या —५५२।०२४।८ सी मिति २०२४।१।६

# दुई शब्द

सदस्य राष्ट्रहरूमा पाठ्यसामग्रीको उत्पादनलाई प्रोत्साहन गर्दै लैजाने यूनेस्कोको कार्यक्रमअन्तर्गत यूनेस्कोकै सहयोगबाट यो पुस्तक तयार गरिएको हो। यस पुस्तकमा नेपालका विभिन्न जाति र लोकगीतको एक परिचय दिइएको छ। हाम्रो पाठ्यसामग्रीको क्षेत्रमा यस किसिमका पुस्तकहरूको ज्यादै आवश्यकता छ। यस आवश्यकताको केही अश पूरा गर्नमा यूनेस्कोले जुन सहयोग दिएको छ त्यसको निमित्त हामी त्यस सस्थाप्रति हार्दिक कृतज्ञता प्रकट गर्दछौ।

प्रद्युम्नलाल
यूनेस्कोका निमित्त नेपाल राष्ट्रिय आयोग
श्री ५ को सरकार, शिक्षामन्त्रालय।

# विषय सूची





# प्रस्तावना

*नेपालको भौगोलिक स्थिति, विभिन्न जाति, संस्कृति, वेशभूषा र बोलीको एक महान् स्रोत ।*

हिमालयको दक्षिणी काखमा फैलिएको नेपाल एक सार्वभौमसत्तासम्पन्न पहाडी राज्य हो । यसको पूर्वदेखि पश्चिमसम्म साधारणतया लम्बाइ ५५० माइल र उत्तरदेखि दक्षिणसम्म साधारणतया चौडाइ १२० माइल छ । यसको न्यूनतम चौडाइ भारतको बिहार प्रान्तको चम्पारन जिल्लाको उत्तर नेपालको चितौन जिल्लामा पर्ने फूलगार्टेको उत्तरी सीमासम्म लगभग ८९ मील छ । साधारणतया यसको पश्चिमी भाग मध्य र पूर्वी भागभन्दा बढी फैलिएको देखिन्छ । नेपालको उत्तरी सीमा भोटसित जोडिएको छ । यसको पूर्वपट्टि उत्तरको कुनामा सीमलीला पर्वत र त्यसभन्दा पूर्व सिक्किम राज्य छ । पूर्वी सिमानामा मेची नदी र पश्चिम बंगालको दार्जलिंग सरहद पर्दछ । पश्चिमतिर महाकाली नदी ( शारदा ) र यसदेखि पश्चिम उत्तर प्रदेशको अल्मोडा जिल्ला पर्दछ । दक्षिणतिर कुनै प्राकृतिक सीमा नभए तापनि १८१६ ईस्वीको सुगौली सन्धिपछि पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म सीमाना छुट्याउन बीचबीचमा खम्बाहरू उभ्याइएका छन् । यसलाई

दशगजा भनिन्छ। नेपालको यो दक्षिण सीमानाको दशगजाले पश्चिमदेखि पूर्वसम्म क्रमश भारतको उत्तर प्रदेश बगाल प्रान्तबाट छुट्टयाउँछ। नेपाल राज्यको अधिकाश भाग ज्यादे अग्ला र होचा पहाड र डाँडाले बनेको छ। समस्त देशको ८३ प्रतिशत भाग पहाड डाँडा, खोच र केही भञ्ज्यागले ढाकेको छ बाँकी १७% मात्र तराईको भाग पर्न आउँछ। नेपालको धरातल ( Altitude ) दक्षिण तराईमा हजारदेखि लिएर उत्तर हिमालयमा उनन्तीस हजार फीटसम्मको छ। धरातलको स्वरूपको आधारबाट नेपाल अधिराज्यलाई तीन मुख्य प्राकृतिक प्रदेशमा बाँड्न सकिन्छ (क) हिमालय प्रदेश। (ख) महाभारत प्रदेश। (ग) ब्याँसी अथवा तराई प्रदेश।

*हिमालय प्रदेश :* बाह्रै महीना हिउँले ढाकिने यो हिमाली प्रदेश नेपालको उत्तर भागमा पर्दछ र यो प्रदेशको उँचाइ लगभग १६,००० फीटदेखि लिएर करीब २९,००० फीट सम्मको छ। १६,००० फीटभन्दा माथि हरबखत हिउँ जमिरहने हुनाले यसलाई हिमरेखा भनिन्छ। देशको समस्त भू-भागको करीब १५% यस प्रदेशमा पर्दछ। सधैं हिउँ र अक्सर बादलले ढाकिने नेपालको यो रहस्यमय प्रदेशका विभिन्न थुका र चोटीहरूलाई नेपालीहरू विभिन्न नामले बोलाउने गर्दछन्। पूर्वदेखि क्रमश पश्चिमसम्म चुलिएका यी चोटीहरूलाई कुम्भकर्ण, महालगुर, रोलवालिन, थाप्ले, जुगल, अन्नपूर्णा, माछापुछ्रे, मुस्ताग, लार्के, व्यास, लद्दाख आदि भनिन्छ। यस

अतिरिक्त समुद्रको सतहदेखि २०,००० फीटभन्दा अग्ला केही प्रसिद्ध शिखरहरू छन् । यी शिखरहरू क्रमश पूर्वदेखि पश्चिमसम्म कञ्चनजघा, मकालु, सगरमाथा, गौरीशकर, गोसाइँस्थान, धवलागिरि, नन्दादेवी आदि नामले बोलाइन्छन् । कुम्भकर्ण हिमालयको सर्वोच्च शिखर नेपालको पल्लो किरात प्रदेशको उत्तर पूर्वी सीमामा सिक्किम र नेपालको सरहदमा चुलिएको कञ्चनजघाको उचाइ २८,१४६ फीट छ। मकालु कुम्भकर्ण हिमालयको यो अर्को चोटी समुद्रतटदेखि २ ·,७९० फीट अग्लो छ। यो पल्लो किरात प्रदेशको उत्तर पश्चिम कुनाको भोट र नेपालको सीमामा पर्दछ। नेपालको पूर्व तीन नम्बर इलाकाको उत्तरी भागमा भोट र नेपालको सीमानामा स्थित महालगूर हिमालको माझ चुलिएको सगरमाथा ससारको सर्वोच्च शिखर हो । यसको उचाइ २९,१४१ फीट छ । रोलवालिग हिमालको सर्वोच्च शिखर गौरीशकर हो । यसको उचाइ २३,४५७ फीट छ । यो नेपालको पूर्व २ नम्बर इलाकाको उत्तरी सीमानामा पर्दछ । लामटाँग हिमालयको अग्लो चोटी गोसाइँस्थान हो। यो पश्चिम १ नम्बर इलाकाको उत्तरमा समुन्द्रतटदेखि २६,३०५ फीट अग्लो छ । मुस्ताङ हिमालयको अग्लो चोटी मुक्तिनाथ हो र यसको उचाइ २२,००० फीट अग्लो छ । धवलागिरि पर्वतमालाको अग्लो चोटी धवलागिरि नै हो र यसको उचाइ २६,७९५ फीट छ। यो नेपालको पर्वत जिल्लामा

पर्दछ। नेपालको पश्चिम सरहदको अन्तिम छेउमा नन्दादेवी पर्दछ। यसको उचाइ २५,७०० फीट छ र नन्दादेवी नेपाल सरहदभन्दा बाहिर परे तापनि यसबाट प्रवाहित अधिकाश जलधारा नेपालको पश्चिमी भागबाटै बग्दछ र नेपालको पश्चिमी सीमामा पर्ने शारदा नदीको शोर यही नै हो।

मुख्य हिमालयका विभिन्न श्रृखला छुट्टिएका ठाउँमा भोट र नेपाल आउने जाने घाँटीहरू छन्। यी प्राकृतिक मार्गहरू प्रायः हिउँले ढाकिएका हुन्छन् र हिउँ पग्लेपछि तिनै घाटीहरूद्वारा बग्ने नदीहरूका किनाराबाट आवागमन सम्भव हुन्छ। यी घाँटीहरू पूर्वदेखि पश्चिमसम्म क्रमश ओलाचुंग, हटिया, नकपा, फल्याक, लामटाँग, कुती, रसुवा शाल्बु, लार्के, मुस्ताँग, नाम्जा, तक्लाखार, र व्यास हुन्।

*महाभारत प्रदेश :—*

मुख्य हिमालयको समानान्तर भई पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म केही होचो अग्लो पर्वतमाला फैलिएको छ। यस पर्वतमालालाई महाभारत भनिन्छ। बीच बीचमा महाभारत पर्वतमालाका कुनै कुनै श्रेणी र तिनका—थुमहरू उत्तर वा दक्षिण ढल्किदै उत्तरमा मुख्य हिमालय र दक्षिणमा चुरे श्रृखलालाई छुँदै मुख्य नदीको जल विभाज्य ( Water shade ) प्रस्तुत गर्दछन्। यो महाभारत पर्वत श्रृखला समुद्री धरातलबाट २,००० देखि १६,००० फीटसम्म अग्लो छ।

हिमालय र महाभारत पर्वत श्रेणीका बीच-बीचमा साँगुरा गहिरा बेसीहरू छन् । यिनीहरू उत्तर दक्षिण फैलिएका श्रेणी-हरू र थुमद्वारा ससाना भागमा खण्डित भएका छन् । महा-भारत र चुरे पर्वत श्रेणीको बीचमा २,००० देखि ३,००० सम्मका फराकिला बेसीहरू छन् । नेपालका अधिकाश मुख्य बस्तीहरू यी नै बेसी र भञ्ज्यागहरूमा पर्दछन् । नेपाल राज्यको करीब ४८% धरातल प्रदेश यो पर्वत राज्यमा पर्दछ ।

*बेसी वा तराई :—*

नेपालको दक्षिणी भाग नदीले बगाई ल्याएको उब्जाउ पाँगो माटोले बनेको समतल मैदानी पेटीलाई तराई भनिन्छ । यसको चौडाइ १६ देखि २० मील र उचाई समुद्र सतहदेखि करीब १००० फीटसम्म पर्न आउँछ । पूर्वी तराई फराकिलो तथा लगातार फैलिएको छ । पश्चिमी तराई साँगुरो तथा खण्डित छ । महाभारत पर्वत श्रृंखलाको दक्षिणमा पश्चिम महाकालीदेखि कोशीको कछारसम्म एउटा होचो पहाडी श्रृङ्खला महाभारतको हाराहारी फैलिएको छ । यो वलोटे पहाड समुद्री धरातलबाट करीब ३००० फीटसम्म अग्लो छ । यसको दक्षिण फेदीमा मेचीदेखि महाकालीसम्म फैलिएको वनलाई चारकोसे झाडी भनिन्छ ।

संसारमा अरू कुनै पनि देश नदीको हिसाबले प्राकृतिक प्रदेशमा बाँडिएका छन् ।

(क) धवलागिरि र नन्दादेवीको बीच कर्णाली, राप्ती, भेरी, सेती र महाकाली नदीहरूले सिंचेको भाग कर्णाली प्रदेश भनिन्छ। यो प्रदेश अघिको बाईसी राजाको थलो हो।

(ख) गोसाईंस्थान र धवलागिरिको बीच त्रिशूली, बूढी गण्डकी, मर्स्याङ्दी, मादी, सेती र काली नदीले सिचेको प्रदेशलाई गण्डकी प्रदेश भनिन्छ। यो प्रदेश अघिका चौबीसी राजाको थलो हो।

(ग) कञ्चनजघा र गोसाईंस्थानको बीच तमोर, अरुण, इन्द्रावती, सुनकोसी, दूधकोसी, लिखु र तामाकोशी नदीले सिंचेको भाग कोशी प्रदेश भनिन्छ।

यसरी धरातलको हिसाबले उत्तर दक्षिण र नदीको हिसाबले पूर्व पश्चिम गरी समस्त नेपाल राज्य ३-३ भागमा बाँडिएको छ। यी तीन प्रदेशको अतिरिक्त वाग्मती र यसका सहायक कर्मनाशा, प्रभावती, विष्णुमती, भद्रमती, रुद्रमती, मणिमती, हनुमती, इक्षुमतीले सिंचित वाग्मती प्रदेश नेपाल चार भन्ज्याग भनिन्छ।

*हावापानी :—*

धरातलको स्वरूप र उचाइमा ज्यादै अन्तर हुनाले यो देशको हावापानीको वास्तविक अवस्था जमीनको उचाइमा भर पर्दछ। अन्य पहाडी मुलुकहरूमा जस्तै नेपालको जलवायुमा पनि मुख्य असर पार्ने तत्व उचाइ र अक्षांश हो। यहाँको धरातल दक्षिणमा लगभग १००० फीटदेखि लिएर उत्तरमा

करीब २९,००० फीटसम्म अग्लो हुँदै गएकोले हावापानीको स्वभाव पनि दक्षिणदेखि उत्तरपट्टि फरक हुँदै गएको छ। अक्षांश पनि उत्तरतिर बढ्दै गएकोले उत्तर हिमाल खण्डमा ताप क़रीब ३०⁰ जति हुन्छ । समुद्री सतहदेखि हरेक ३०० फीटको उचाइमा १" को हिसाबले तापक्रम घट्तै जान्छ। त्यसैले दक्षिणपट्टिको तराईमा सालाखाला तापमान ८०° र बीच पहाडी भागमा ६०⁰ रहन्छ। पहारिलो र स्वास्थ्यकर हावापानी महाभारत पर्वतमालाको बस्तीहरूमा पाइन्छ। दशको सालाखाला वर्षा दक्षिण तराईमा ८०", बीचको पहाडी भागमा ५०" र हिमाल खण्डमा २०" जति हुन्छ। यहाँ मुख्य ३ ऋतु हुन्छन्। ग्रीष्म ऋतुमा सुक्खा गर्मी, वर्षा ऋतुमा ओसिलो गर्मी र हिउँदमा सुक्खा ठण्डा हुन्छ। यो देशमा वर्षा ग्रीष्म ऋतुमा हिन्द महासागरबाट वहने मनसुन वायुद्वारा हुन्छ। मुख्यतया यहाँको जलवायु मौसमी (मनसुन) छ भन्न सकिन्छ। सालभरमा जति पानी पर्दछ त्यसको ९०% ग्रीष्म ऋतुमा पर्दछ। हिन्द महासागरबाट वहने मौसमी वायु र उत्तरपट्टि बगोपसागरबाट बहने मौसमी वायु तथा पूर्वपट्टि अरब सागरबाट वहने मौसमी वायुले पश्चिम खण्डमा पानी पर्दछ। तराई भागमा सबभन्दा धेरै पानी पर्दछ। तापमान जस्तै वर्षा पनि उत्तरतिर घट्तै जान्छ र पूर्वबाट पश्चिमतिर पनि घट्तछ। काठमाडौ उपत्यकामा सालाखाला ५८" जति पानी पर्दछ।

*निवासी :—*

नेपाल अधिराज्यका निवासीहरूको निवासस्थल देशको यस्तो प्राकृतिक विभागको आधारमा साधारणतया विभाजित हुन्छ । नेपालको उत्तरी भागमा हिउँ परिरहने हुनाले सांस्कृतिक दृष्टिकोणले हिमालयका उत्तरपट्टि तिब्बती जातिका अनुरूप शेर्पा, तामाङ, आदि भोटे जाति बस्दछन् । महाभारत शृङ्खलाका मूल निवासीहरू मगर गुरुङ, सुनवार, किरात, नेवार आदि हुन् । तराई तथा भित्री मधेसका मूल निवासीहरू थारू, दनुवार, धीवर, मेचे, गनगाई, आदि हुन् । कोशी प्रदेश-मा अरुण नदीदेखि पूर्व लिम्बुहरूको थलो हो । अरुण नदी-देखि पश्चिम माझ किरात प्रदेश राईहरूको थलो हो । सुन-कोशीको उत्तर र दूधकोशीको पश्चिम भागलाई सुनवारहरूको थलो भन्न सकिन्छ । यस्तै गण्डकी प्रदेशमा त्रिशूलीभन्दा पश्चिम र चेपेभन्दा पूर्व हिमालयको ब्यॉसीसम्म गुरुङहरू बस्दछन् । त्रिशूली राप्ती बीचको प्रदेशमा मगरहरू बस्दछन् । यिनीहरूको आबादी महाभारत पर्वत र त्यसको ब्यॉसी हुँदै पश्चिममा कर्णाली प्रदेशसम्म फिँजिदै गएर सेती र कर्णालीको दोभान-सम्म पुग्दछ । कर्णाली प्रदेशको उत्तर कर्णाली र भेरीको बीच हिमालयको दक्षिण पाखामा गुरुङहरूको प्राधान्य छ । नेपाल अधिराज्यको मध्यभाग गण्डकी प्रदेशको बाग्मती क्षेत्र नेवार जातिको थलो हो ।

यसरी नै देशको प्राकृतिक बनोटले विभिन्न भागका जाति-

को सस्कृति, वेशभूषा र बोलीमा पनि असर पारेको छ, र फलस्वरूप विभिन्न भागमा विभिन्न किसिमका सस्कृति, वेशभूषा र बोली परिलक्षित हुन्छन् । हिमालय प्रदेशका जातिहरूमा एक किसिमको रीतिरिवाज, रहन-सहन, बोली-वचनको प्रचलन छभने पर्वत प्रदेशका जातिको अर्कै किसिमको छ र तराई प्रदेशका जातिको त्योभन्दा बेग्लै छ । यसरी देशको भौगोलिक स्थिति विभिन्न जाति, सस्कृति, वेशभूषा तथा बोलीको एक महान् स्रोतको रूपमा खडा रहेको छ ।



# इतिहास-एक साझा फूलवारीको कथा

यसैले यस देशको इतिहास नै पनि एक साझा फूलवारीको कथा भएको छ। विभिन्न जातिको विभिन्न वेशभूषा, रीति-रिवाज, संस्कृति, बोली, लोकगीत आदिले मिलेर सामूहिक रूपले यस देशको अस्तित्व कायम गरी यसको व्यक्तित्व विकास गरी आएका छन्।

निःसन्देह शुरूमा अर्थात् १७९७ सालसम्म यी विभिन्न संस्कृति, वेशभूषा र बोली भएका जातिहरूको स्वार्थ र अस्तित्व साझा थिएन। यो देश सबैको साझा हो र यहाँको कुनै पनि भागमा भएको समस्या साझा समस्या हो र त्यसको समाधान नै साझा स्वार्थ हो भनी सम्झने वातावरण तयार हुन सकेको थिएन। विभिन्न राजनैतिक इकाईहरूमा बाँडिएका भैं यी नेपाली जातिहरूले आफूलाई साझा फूलबारीका फूल हौं भनी सम्झन नसक्नु स्वाभाविकै पनि थियो। त्यो बेला काठमाडौं उपत्यकाभन्दा पश्चिम गण्डकी प्रदेशमा पाल्पा, तनहुँ, लमजुङ, गलकोट, पर्वत, रिसिङ, घिरिङ, गह्रूँ, ढोर, गुल्मी, मुसिकोट, इस्मा, प्यूठान, भिरकोट, धुरकोट, अर्घा-खाँची, सतहुँ, कास्की, सल्यान आदि चौबीसी राज्यहरू थिए। कर्णाली प्रदेशमा सानाठूला गरी जुम्ला, जाजरकोट, छाम,

अछाम, रूकुम, रोल्पा, मालनेटा, बझाङ, दैलेख, वाङ्फी, जहारी, फलावाङ्, गर्वकोट, गुटुम, मजुर, घर्मा आदि बाईसी राज्यहरू थिए। कोशी प्रदेशमा मानातिना रजवाडाहरूका राज्य थिए जसमा मगरात, किरात र सेन राजाहरूका राज्य प्रमुख थिए। यस्तै काठमाडौ उपत्यका भक्तपुर, ललितपुर र कान्तिपुर तीन राज्यमा विभक्त थियो।

तर श्री ५ बडामहाराज पृथीनारायण शाहको प्रादुर्भाव भएपछि यीससाना राजनैतिक सीमाहरू मेटिदै गए, र विभिन्न जाति, सस्कृति र वेशभूषाले एक नेपाली जातिको विभिन्न अगको रूपमा फल्न र फुल्नतिर सलग्न हुन पाए।

त्यसो भनेर यो क्रम निर्बाध गतिले चल्दै गयो भन्ने होइन। केही कालपछि नै शक्तिमा आएको राणा शासनबाट यसको लागि अनुकूल वातावरण तयार हुन सकेन, र स्वस्थ राष्ट्रियताको विकासको लागि यिनीहरूको आपसमा जुन सामञ्जस्य हुनुपर्ने हो त्यो हुन पाएन। २००७ सालको क्रान्तिपछि यस स्थितिमा परिवर्तन आयो र २०१७ सालको परिवर्तनपछि श्री ५ महाराजाधिराज महेन्द्रवीरविक्रम शाहदेवको सुयोग्य नेतृत्वमा देशले उचित मार्ग दर्शन पाएपछि, पञ्चायत-व्यवस्था-अन्तर्गत, भौगोलिक स्थिति जन्य यी विभिन्न जाति, सस्कृति, वेशभूषा र बोली आ-आफ्नो भौगोलिक सीमालाई नाघ्दै, देशको सामूहिक स्वार्थलाई आत्मसात् गर्दै अघि बढ्न कटिबद्ध भए।

*वर्तमान–एक संगम :*

फलस्वरूप आजको स्थिति-परिस्थिति यी विभिन्न जाति-हरू तथा तिनीहरूका संस्कृति, वेशभूषा तथा बोलीको लागि एक संगम-स्थल भएको छ। राष्ट्रिय एकतामा उनिई आपसमा मिलिजुली विकसित हुँदै जाने अनुकूल वातावरण यिनीहरूले पाएका छन् र यसै सन्दर्भमा विभिन्न परम्परा भएका यी विभिन्न जातिहरू र तिनीहरूको लोकगीतको अध्ययन गर्न समीचीन हुन्छ।



# हिमालय प्रदेशका जाति र तिनी-हरूको संस्कृति

## अधिराज्यका प्रमुख जातिहरू

*हिमालय प्रदेशका जाति र तिनीहरूको संस्कृति :*

नेपालको उत्तरी भाग हिमालय प्रदेशको काँठ जहाँ वर्षैं भरि हिउँ परिरहन्छ, शेर्पा, भोट, तामाङ, भिङे, थकाली आदि जातिहरूको वासस्थान हो । यी जातिहरूको शारीरिक गठन, आचार, विचार, धर्म र संस्कृति हिमालयको उत्तरराष्ट्रिका निवासी तिब्बती जातिहरूसँग धेरै मात्रामा मिल्दोजुल्दो छ। थेप्चो नाक, पहेलो रङ र दोब्रिएका परेला भएका यी जाति-हरूको मुख्य पेशा पशुपालन जडीबूटी तथा नूनको व्यापार र ऊनको व्यापार हो । भोटेहरूभन्दा शेर्पा, मुर्मी र तामाङहरू हिमरेखाभन्दा मुनिका वस्तीमा बस्ने हुँदा यी जातिहरू केही मात्रामा आलु, जौ, मकै उमार्दछन् ।

*शेर्पाः*—शब्दको भोटे भाषामा अर्थ "पूर्विया" हुनाले यो जाति भोटतिरबाट आई नेपालको उत्तर पूर्वमा बसेको हुनु-पर्दछ। आज पनि पूर्वी नेपालको उत्तरी भागमा यिनीहरूको

सङ्ख्या प्रशस्त छ र यो जातिले सिक्किम, दार्जलिङ छोपेको छ। पूर्वी नेपालको उत्तरी भागमें सीमित भएर बसेका शेर्पाहरूमा तिब्बती छाप स्पष्टै देखिन्छ तापनि व्यापार र व्यवसायको दार्जलिङ, सिक्किम झरेका शेर्पाहरूमा आचरण र व्यवहारको फरक आइसकेको छ। यी शेर्पाहरू कति क्रिश्चियन भइराकेका छन्‌भने कति शैवधर्मावलम्बी भइसकेका छन् र जुन ठूलो समुदायको नजदीक पुग्यो त्यसैको रङ लिइसकेका छन्। चम्री गाई तथा च्याङ्ग्रा भेडा पाल्ने र आलु जौ उमारेर जीविका चलाइआएका यी जातिहरूको जीवनमा हिमालय वरदान भइआएको छ। खास गरेर विश्वको अग्लो चुचुरो सगरमाथा आरोहण गर्ने विदेशीहरूको रहरले झण्डै आधा शताब्दीअघि-देखि यो जातिको एक नयाँ पेशा खुल्न गएको छ। यिनलाई मार्ग-प्रदर्शक र भरिया नराखी कुनै पनि चुली आरोहण गर्नु विदेशी दलहरूको लागि असम्भव भएकोले यो पेशाले व्यापक रूप लिंदै गइरहेछ। तेन्जिङ शेर्पाको सगरमाथाको सफल आरोहणले आज प्रत्येक शेर्पा युवक र युवतीको एकमात्र अभि-लाषा कठोर चुलीको सफल आरोहण हुन गएको छ। हृदयमा सङ्लो मुस्कानको रहर, ओठमा प्रेम र विजयको गीत लिएर उचाइमा बस्ने यी जाति उँचाईतिरै लम्किरहेका पाइन्छन्।

*तामाङ र मुर्मी* :—आफ्नो जातिको लोककथाअनुसार तामाङ र मुर्मीहरू आफूलाई हिन्दूहरूका त्रिदेवमध्ये महादेवका सन्तान मान्दछन्। यी उत्तरतिरका अधिकाश जाति झैं भोटतिरबाटै

झरेका हुन् । यी जातिहरू दुइ भागमा विभाजित छन् । अट्ठार जात र बडा तामाङ मानिन्छन् र महेश्वरका झर्रा सन्तान भएकाले अट्ठार जातभन्दा आफूलाइ श्रेष्ठ ठान्दछन् । यिनको आफ्नै तामाङ भाषा छ तापनि तामाङ भाषा बढ्ता भोटे बोलीसँग मिल्दो छ । यो जातिका स्त्री पुरुषहरू भोट र नेपाल-का बीच मालसामान ओसार्ने काम गर्दछन् । यसबाहेक हिमालय प्रदेशका भिराला जमीनमा यिनीहरू आलु र जौ पनि उमार्दछन् ।

*भिङ :-* नेपाल राज्यको उत्तर पश्चिम भागमा बस्ने यो जाति भोटे जत्तिकै खचडा भनिन्छ र यिनीहरू भोटे भाषासँग मिल्दोजुल्दो खचडा भिडे भाषा बोल्दछन् । यो जातिको मुख्य पेशा महाभारत प्रदेशका बस्तीहरूमा डुली अन्नसँग नून साट्नु हो । हिउँदभरि नूनसँग साटेर लगेको अन्नको खोले पिएर वर्षा गुजार्दछन् । केही मात्रामा यी जाति पनि आलु, गहूँ, जौको खेती गर्दछन् ।

*भोटे :—*नेपालको उत्तरी भेगको अग्ला पाखामा बस्ने यी भोटेहरूको सबै चालचलन, धर्म तथा व्यवहार तिब्बतका भोटे-हरूको सरह नै छ । यिनको विहावारी, लेनदेनसमेत तिब्बत-सँग चलिआएको छ । दुर्गम हिमाली प्रदेशमा आइमाईहरूका जनसख्या कम हुने हुँदा दाजुभाइ सबैले एउटै स्वास्नी राख्ने चलन यो जातिमा प्रचलित छ । बाह्रै महीना हिउँ पर्ने यिनी-हरूको बस्तीमा पानीको अभाव हुने र ज्यादै कठोर ठण्डी हुने हुँदा यिनीहरूको शरीरले पानीको स्पर्श जीवनमा कमै पाएको

हुन्छ। ठण्डीबाट बच्न यिनीहरू दोचा र लामो पाखीका घुँडा-मुनि झर्ने लबेदाजस्तो कोट लगाउँदछन्। यिनीहरू स्त्री-पुरुष दुवै जाति कपाल पाल्दछन्। ठूला ठूला तामाका रोचामा आगोको रापले हिउँ पगालेर पानीको काम लिने गर्दछन्। भोटे जातिको मुख्य पेशा व्यापार हो। यिनीहरू तिब्बत र नेपालको बीचमा व्यापार गर्दछन्। नेपालमा यिनीहरूको मुख्य व्यापार च्याङ्ग्रा, भेडा, घोडा, पाखी, कस्तूरी, स्याग, जिम्मू तथा यस्तै प्रकारका अनेक जडीबूटीहरू हुन्। नेपाल बाट यिनीहरू मट्टितेल आदि लगेर तिब्बतमा व्यापार गर्दछन्। यिनीहरू जडीबूटी र कस्तूरीको व्यापार हिन्दुस्तान, बर्मा, मलायासम्म पुगेर गर्दछन्। हिमालय प्रदेशका अरू जाति-भन्दा भोटेहरू आर्थिक दृष्टिले सम्पन्न हुन्छन्।

# महाभारत प्रदेशका जाति र यिनी-हरूको संस्कृति

## महाभारत प्रदेशका जाति र तिनी-हरूको संस्कृति

उत्तरको हिमालय प्रदेश र दक्षिणको तराई प्रदेशको बीच-को महाभारत प्रदेश जसको पर्वत श्रृङ्खला समुद्री धरातलबाट २००० देखि १६००० फीटसम्म अग्लो छ र जहाँ २००० देखि ३००० फीटसम्मका फराकिला बेसीहरू छन् गुरुङ, किरात र नेवारहरूको मुख्य थलो हो।

*गुरुङ :—*

गुरुङ जातिहरूको बस्ती प्राय उत्तरी भागमा नै भएकाले यिनीहरूले आफ्नो तिब्बतीपनलाई गुमाइसकेका छैनन्। यिनीहरू तिब्बती बर्मेली परिवारको गुरुङ भाषा बोल्दछन्। यिनीहरूको गुरुङ भाषा भोटे भाषासँग ज्यादै मिल्दो-जुल्दो छ। गुरुङहरू मुख्यत दुइ प्रधान जाति ४ जात र १६ जातमा बाँडिएका छन्, १६ जातेभन्दा ४ जाते ठूला मानिन्छन्। ४ जातेमा लामे, लामीछाने, घले, गोदाने पर्दछन्। ४ जात र

१६ जातको भातपानी चले तापनि भरसक बिहाबारी चल्दैन। यिनीहरूको मुख्य पेशा पशुपालन र दोस्रोमा खेती हो। उत्तर-पट्टिको अग्लो प्रदेश र अग्लो भागमा बस्न रुचाउने यो जातिले नहर र कुलोबाट पट्ने खेत भेट्टाउन निकै तल ब्याँसीमा झर्नुपर्ने हुँदा धानखेतीभन्दा अग्लो पर्वतीय प्रदेशमा उब्जने जौ, गहूँ, आलु, मकै, कोदो फापर आदि उमार्दछन्। नयाँ आबादी गरिएको ठाउँ ज्यादै मलिलो र बढ्ता अनाज उब्जने हुँदा जगलको बीच बीचमा खोरिया फाँडेर डुलुवा खेती गर्न यो जाति विशेप मनपराउँछ। कृषि र पशुपालन बाहेक विदेशी फौजीमा भर्ती हुन जाने यिनीहरूको मुख्य धन्धा हो। हिमालय पर्वतको हिमरेखामुनि भिरालो जमीनमा भेडी-गोठ राखेर यसकै ऊनबाट राडी र काम्लाहरू तयार गर्दछन्। लेकको अल्लो र पाटको रेषा निकाली यसैबाट भाँग्रा, भेडाका ऊनबाट तयार हुने बक्खु यस जातिका पुरुषहरूको मुख्य पहिरन हो। गुरुड जातिका आइमाईहरू अक्सर लोग्नेमानिसले विदेशबाट लिएर आउने मखमलको रातो चोलो, कालो फरिया, कलेजी बुट्टे घलेक र यस्तै रातो रँगको प्राधान्य भएको मजेत्रो ओढ्न रूचाउँछन्।

यो जातिको बिहेबारी केटा र केटीको मञ्जूरीबाट हुने प्रेम-विवाह र बाबु आमाको मञ्जूरीबाट कन्या मागेर गरिने दुवै चलन प्रचलित छ। कन्या माग्न जाँदा दुल्हापट्टिकाले कन्याका बाबुलाइ ११ मोहर दिने चलन छ। यस्तै तालुकदारलाई

मो रु १।, कटुवाललाई ५० पैसा, दूधको भारा तिर्ने भनी कन्याको आमालाई मो रु १। कन्याका बाबुलाई साइपाटा खर्च मो रु. १। दस्तूर दिएपछि कन्याको बाबुले वाग्दत्त बोलेर दुल्हाको गोत्रमा कन्याको गोत्रलाई सार्दछ। दूधको ठेकी रक्सीको पुग र रोटीको सोली बोकेर दुल्हापट्टिका आफन्तहरू जन्तीभन्दा अगाडि सगुन लिएर पुग्दछन्। त्यो सगुन दुलही-पट्टिका भलाद्मी निम्तालुहरूले खान्छन्। रातको लगनमा कन्यादान हुन्छ। दुलहीको डोलीसँगै भोलिपल्ट गाउँका तन्नेरी-हरू दुल्हाको घरसम्म पुऱ्याउन जान्छन्। यिनीहरूलाई दुल्हाले दस्तूर दिएर बिदा गर्नुपर्दछ। गुरुङ जातिको लोग्ने मानिस मर्दा सेतो र स्वास्नी मानिस मर्दा रातो कात्रो चाहिन्छ। मलामी जाँदा झ्याली र ढयाँग्रो बजाउँदै गाउँका लोग्नेमानिस स्वास्नी-मानिसहरू अग्लो डाँडामा लाशलाई लिएर जान्छन्। यिनीहरूको लाशलाई गाड्ने चलन छ। लाश गाडेको ठाउँमा ढुगाको सानो स्तूप खडा गरेर त्यसमाथि कालो ध्वजा छोड्द-छन्। यस स्तूप आकारको ढुंगाको थुप्रोलाई माने भन्दछन्। मरेको मानिसलाई तार्न यिनीहरू अर्धौं गर्दछन्। नौ माना चामलको घिउमा मलेको भातको पिण्ड ( कैदु ) बटारी जगायामा राख्दछन् र ३ दिनपछि जुठो लाग्ने सबै नातेदार-हरू जम्मा भई रक्सी फलफूल आदि मरेको मानिसको निमित्त चढाउँछन्। साँझमा अपशोची "नाच" ध्यादुँ नचाउँछन्। बिहान "मैदु" नाच हुन्छ। साँझमा झाँक्रीले स्याहा (सातौ)

बोलाएपछि गाउँभरका आइमाईहरू जम्मा भएर अपशकुन स्वर झिकेर रुन थाल्छन्। यसको भोलिपल्ट दिनभरि ढोलकी र झुरमा बजाई मरेको मानिसलाई स्वर्ग पुऱ्याउन सेक्ता नाच चल्दछ। बेलुका अर्धौं सेलाउन जगली जनावरका प्वाँख र हाड टाउकामा घुसारेको घग्रा र रिठ्ठाका माला लगाएका लामा ध्यांब्रिग, ढ्यांग्रो र झ्यालीको तालमा उफ्री उफ्री नाच्दछन्। अर्धौं सेलाएपछि जगियामा राखेको "कैदुँ" मा एक-एकवटा मासुको चोक्टा राखेर गाउँको दैला-दैला घुमाउँछन्। यो पिण्ड कुखुरा र कुकुरलाई खुवाइन्छ। यो जातिको प्रसिद्ध नाच "घाटुँ" नाच हो। यो दुई किसिमको हुन्छ एउटालाई सती र अर्कोलाई बाह्रमासे भन्दछन्। सतीमरा मादल बजाइन्न र बाह्रमासेमा बजाइने चलन छ। "घाटु" नाचका मुख्य पात्रहरू गुरुँग जातिको लोककथाका "पश्रामू" राजा र "अम्बावती "रानी हुन्। "घाटु" नाचको गीतमा चन्द्र सूर्य आकाश पृथिवीको स्तुति गरिसकेपछि फूलको बीउ रोप्ने, फूल उमार्ने, फुलाउने, अनि निगालो काटेर ढक्की बुनी त्यही फूल टिपेर पूजा गर्ने आदि कुराहरू हुन्छन् "घाटु" मा हिमचुली, वर्चुली, देउचुली र गुँगाचुलीका महिमाहरू गाइन्छन्। सिगारिएका दुइटा घाटुली पानीले तीन फन्का मारेको काठमाथि गीत सुनेर बस्दछन्। जुम्ल्याहा हात गरेर काँपिरहेका घाटुलीका अगाडि थालीमा दही चामल फूलपाती राखिएको हुन्छ। घाटुलीको शरीरमा सरस्वती नचढुन्जेलसम्म गीत

थामिदैन । आँखा बन्द गरेर काँपिरहेका घाटुलीहरूको गीतले नै आँखा खोलिन्छ । बसेका घाटुलीलाई उठाउन मादल बज्द छ । लर्केको पटुकाको फुर्को समाती औलालाई तालमा नचाउँदै आँखा चिम्लेका घाटुली उठ्दछन् । आँखा खुल्ने गीत आएपछि घाटुलीले पाती लिएर आँखामा लगाउँछन् । तीन फेरासम्म हिमचुलीको गीत गाउँदा पनि पाती झरेनभने गुरु बाबुहरू-बाट वर्चुली गीतको आरम्भ हुन्छ । पश्रामु राजा लडाईंमा मरेपछि अम्बावतीले सिगार गर्न लाग्दा ऐनामा अपशकुनहरू देखापर्दछन् र आफ्नो एकमात्र छोरा बाले कृष्णलाई जिम्मा लगाएर अम्बावती रानी सती जान्छिन् । कथा यत्तिकैमा सकिन्छ । नाच सकिएपछि दही चामलको टीका प्रसादको रूपमा दर्शकहरूलाई लगाइन्छ । गुरुग जातिको घाटु बाहेक सोरठी, पिगला र गोपिचन यी प्रसिद्ध पुराना नाच हुन् । यी विशेष पर्व र उत्सवमा हुने पौराणिक नृत्य र गीत बाहेक दैनिक जीवनका सुख-दुःखसँग मुछिएका पवित्र मनका उद्‌गारहरू गोठ गाउँघर अँधेरा जहाँसुकै जुनसुकै बखत पनि यिनका ओठबाट चिप्लिरहेका हुन्छन् । दिनभरको परिश्रमपछि घर वा गोठमा पाकेको साग सिस्नु खाएर गुरुग जातिका तरुणी तन्देरीहरू रोदीघरमा जम्मा हुन्छन् । जहान कोही नभएकी एकली बूढी आइमाईको घर वा लोग्ने छोरा नभएको चेली-बेटी मात्र भएको अथवा गाउँको बीचमा पर्ने कुनै गोठ कटेरो टौवा-मुनि ठिटा-ठिटीहरू जम्मा हुने ठाउँलाई रोदीघर भनिन्छ ।

त्यस ठाउँमा सम्मिलित हुन जानेलाई रोदी बस्न जाने भनिन्छ।

*किरॉत :—*

हिमालयका काखका प्राचीन जातिमध्ये किरॉत एक प्रमुख जाति हो। हाल किरॉतहरू नेपालको पूर्वी भागमा बसोवास गर्दछन्। राई र लिम्बु २ भागमा यो जाति विभाजित छ। बहादुरी किरॉत जातिको प्रधान जातीय गुण हो। यिनीहरूको मुख्य पेशा कृषि नै हो। विदेशी फौजमा सेवा गर्नु यो जातिको अर्को पेशा हो। यो जातिको बस्तीहरूमा विदेशी फौजमा काम नगरेका वा बहादुरी वापत पेन्सन नपाएका मानिसहरू कमै पाइन्छन्। समुद्रको सतहभन्दा ४०००-५,००० फीट उचाइमा बसोवास गर्ने यो जातिको ढुगाको गारो र अक्सर ढुगाकै छाना भएका एकतले घरहरू छुट्टा-छुट्टै खेती गर्ने पाखाहरूको बीच-बीचमा उभिएको पाइन्छ। यसै प्रकार यस्ता बस्तीहरू कोसौं फैलिएको पनि पाइन्छ। असार-साउनमा मकैघारीभित्र हराउने यी घरहरू मसिर-पुसतिर पहेलै तोरी बारीको बीचमा हाँसिरहेको देखिन्छ। अक्सर राई जातिका घरहरूमा दुइटा मूल ढोका राखिने चलन छ। एउटा ढोका पूर्व र अर्को ढोका दक्षिणतिर फर्किएको हुन्छ। अरुण खोलाको माथिल्लो भागतिर काठको खुट्टामा जमीनभन्दा ३।४ हातमाथि उठाएर बनाएका काठका घरहरू पाइन्छन्। यस्ता घरहरूमा अगाडि पट्टि बरण्डा निकालिएको हुन्छ र बरण्डा र आँगनको बीच लिस्नो उभ्याइएको हुन्छ। यस्ता घरहरूका भित्ता बाँसका

कप्टेराका हुन्छन् र छाना पनि भकारीले छाइएको हुन्छ। यी घरहरूको मुनि कुखुरा, सुँगुर र भेडाहरू पालिन्छन्। यिनीहरूको घरेलु सामानहरूमा काँसका थालीहरू, फलामे ताप्के, माटाका घैंटा, सोली, डोको, डाला आदि हुन्छन्। अरुण खोलाका माथिल्लो भागका राई बस्तीहरूमा धातुका भाँडाहरू कमै चलनमा ल्याउँदछन्। यतातिर पानी पनि बाँसको ढुंग्रोमा ओसारेको पाइन्छ। यिनीहरू आफ्ना बारी र खेतहरूमा मकै, कोदो- गहूँ, तोरी, आलु, आदिको साथै केही मात्रामा धान पनि उमार्दछन्। आफ्नो पारिवारिक आवश्यकताअनुसारको बाली उमारे तापनि जाँड रक्सीको लागि धेरै अन्न कुहाउने हुँदा यिनीहरूलाई वर्ष छिचल्न धौ-धौ ने पर्दछ। यही र यस्तै कारणहरूले गर्दा किराँती युवकहरू विदेशी फौजमा काम गरी कमाउन विदेशतिर लाग्दछन्। अधबैसेहरू बाली थन्क्याइसकेपछि तराईका जिल्लाहरूमा कामको लागि ओर्लन्छन्। हिउँदको २।३ महीना धरान, बिराटनगर, जयनगर आदि ठाउँहरूमा ज्यालादारी काम गरी वर्षे नूनं तेल र कपडाहरू धान्दछन्। खोरिया फाँडेर डुलुवा खेती गर्ने चलन पनि यो जातिमा छ। किराँत जातिहरूमा एक विवाह प्रथा छ। बिहा तीनै किसिमबाट गरिन्छ। वर र कन्याको बाबु आमाको मञ्जूरीवाट, केटी जबर्दस्ती भगाएर वा केटाकेटी दुवैको मञ्जूरीले गान्धर्व रीतले। तीनै किसिमको विवाह प्रचलनमा छ। सम्झौताअनुसार गरिने विवाह धनी परिवारहरूमा मात्र सीमित छ। यिनीहरू

को कन्यादान गर्दा सिदूर हाल्ने चलन छ। तीन तरीकामध्ये जुनसुकै एक तरीकाबाट विवाह भए तापनि धार्मिक नेता "नोक्चेको" आशीर्वाद लिनु आवश्यक मानिन्छ। सम्झौता अनुसार गरिएको बिहामा केटीहरूको अक्सर २।३ वर्ष माइत बस्ने चलन हुन्छ।

राईहरूको विधवा भाउजू, साली सोल्टी बिहे गर्ने अधिकार हुन्छ। यिनीहरूमा जारी गर्ने प्रथा पनि छ। अविवाहिता केटीले बच्चा पाउनु यिनीहरूको समाजमा अपराध मानिदैन। यति मात्र हो कि केटीको प्रेमीले सुत्केरी खर्च बेहोर्नै पर्दछ। विवाहित जोडीको पारपाचके भएमा छोरोचाहि बाबुपट्टि र छोरीचाहि आमापट्टि बस्ने चलन छ।

किरॉतहरूको हिन्दू वा बौद्ध धर्मभन्दा फरक परन्तु हिन्दू वा बौद्ध धर्मबाट प्रभावित एक अनौठो धार्मिक परम्परा छ। यिनीहरूका स्थानीय देवी-देवताहरू प्रशस्त छन्। हिमालयको चुचुरोमा बस्ने जालपादेवी र सप्तकन्या यिनीहरूका मुख्य देवी हुन्। यिनीहरूको आफ्ना धार्मिक लोककथाका पुर्खाहरू शिकाताकहाउ बूढो, वाल्मे बूढी, कुलुग बूढी, माडतेवा बूढी, मोलु सिकारी, आदिहरूको पूजा पनि गर्दछन्। यिनीहरूको लोककथाअनुसार यी पुर्ख्यौली देवताहरू ज्यूँदै पृथिवीमा लोप भएका थिए रे। यी देवताहरूलाई प्रत्येक चाड-पर्व तथा उत्सवहरूमा फल-फूल अन्न आदि चढाइन्छ। प्रत्येक राईहरूको घरको कुनामा "खाभाड" भन्ने इष्ट देवतालाई एउटा माटाको

भाँडोमा भुण्डयाइएको हुन्छ । यसलाई व्यक्तिगत खुपीको देवता मानिन्छ र शिकार गरेको मासुको प्रथम टुक्रा चढाइन्छ। "खार्तोक", "लीक्कोमाङ", "नागी" आदि पूजा तथा उत्सव-हरू मनाउने प्रचलन छ । आश्विन महीनामा मनाइने यो खार्तोक चाडमा पृथिवीको पूजा गरिन्छ । दादुरा, बिफर आदि-ले गाउँमा प्रवेश नगरोस् भन्नाको लागि "लीक्कोमाङ" पूजा गरिन्छ । अंगविहीन बच्चा नजन्मुन् र बच्चाहरूलाई कुनै रोग नलागोस् भन्नाको लागि "नागी" पूजा गरिन्छ । यी पूजा-हरूमा कुखुरा, सुँगुर, राँगो आदि काटेर भोज खाइन्छ । धार्मिक पूजा आजा चलाउने धर्मगुरुलाई "नगोपा" भन्दछन् । यो "नगोपा" लाई बराबर देवता आउँदछ र ईश्वरको प्रतिनिधि स्वरूप मानिसहरूलाई निर्देशन गर्दछ । यही नगोपाले झाँक्री र वैद्यको काम पनि गर्दछ ।

राईहरूमा मरेको मानिसलाई गाड्ने चलन छ । कुलुँगे र खालिंगे राईहरूलाई घरको नजीकै खेती हुने जमीनभित्र गाड्ने चलन छ र मृत लाशलाई तेह्र दिनसम्म खानेकुरा र रक्सी दिनुपर्दछ । अरूहरूको चाहि गाउँ बाहिर गाड्ने चलन छ । यी सब काजक्रियाको लागि धर्मगुरुको आवश्यकता पर्दछ । अप-शोच छ दिनसम्म मनाइन्छ । अपशोचका दिनहरूमा नून, मासु, रक्सी, र तेल आदि खानु हुँदैन । मरेका मान्छेहरूको सम्झनामा वर पीपल रोप्ने, चौतारा बनाउने आदि चलन यो जातिमा छ । यो जातिमा सयुक्त परिवारमा बस्ने चलन उति-

को छैन। बिहा गरेको केही वर्षपछि नै छुट्टिने चलन छ। मकैको भित्री तहको नरम खोसेल्टोमा सुर्ती बेरेर चुरोट पिउने यो जातिका केटीहरूको तुनामा एउटा सानो सारगी कहिल्यै टुटेको हुँदैन।

*नेवार :—*

काठमाडौ उपत्यकाका मूल निवासीहरूलाई नेवार भनिन्छ। यी नेवारहरू काठमाडौ उपत्यकाभन्दा बाहिर पूर्व पश्चिम पहाडमा र तराईमा समेत फैलिएका छन्। यिनीहरूको आफ्नो अलग विकसित नेवार भाषा छ। नेपाल उपत्यकाको मलिलो माटोमा जन्मिएको यो जाति नेपालका अरू जातिहरूको तुलनामा ज्यादै सुसस्कृत छ। हजारौ वर्षअघिदेखि हिमालयवारि-पारिका देशको व्यापारको बाटो यही उपत्यका पर्ने भएकोले यहाँका निवासीहरू उद्योग धन्धा व्यापार तथा कलाकौशलमा विशेष निपुण छन्। धर्मको आधारमा नेवारहरू दुई जातिमा बिभक्त छन्, (क) बुद्ध मार्गी र (ख) शिव मार्गी अथवा हिन्दू धर्मावलम्बी। हिन्दूधर्मावलम्बीहरूमा ४ वर्ण छन् र यिनी-हरूमा देउभाजु ब्राह्मण, छ थरे कहलाइनेहरू क्षत्री, चार वा पाँच थरे भनिने वैश्य र पोडे तथा च्यामेहरू शूद्र हुन्। बौद्ध-मार्गीहरू तीन भागमा विभाजित छन्—बाँडा, वज्राचार्य, भिक्षु, वा शाक्यभिक्षुहरूलाई प्रथम श्रेणीमा लिन सकिन्छ। यिनी-हरूमा पनि बाँडाहरू बिशेष उच्च मानिन्छन्। दोस्रो वर्गमा उदासहरू आउँछन्। यिनीहरूको सामाजिक तथा धार्मिक

कामहरू पहिलो वर्गद्वारा गराइन्छ। बौद्धमार्गी नेवार जाति-हरूको तेस्रो वर्गमा सबभन्दा ठूलो वर्ग ज्यापूहरू आउँछन्। सुन चाँदी तथा अन्य धातुहरूमा मोही काम गर्ने यी बाँडाहरू कलाकौशलमा ज्यादै नै निपुण हुन्छन्। बौद्धधर्मावलम्वी नेवारहरूमा यी प्रथम वर्गमा पर्ने र यिनीहरूकै हातमा धार्मिक नियम पनि पर्ने भएकाले नेपाली कलामा बौद्धधर्मको लाक्ष-णिकता विशेष रूपमा पाइन्छ। बौद्धमार्गीहरूको तेस्रो वर्ग ज्यापूहरू कृषिजीवी हुन्। यस बाहेक नेवार जातिको मुख्य पेशा व्यापार र सरकारी नोकरी नै हो। हिन्दू धर्मावलम्बी नेवारहरूको कर्मकाण्ड तथा संस्कार अन्य हिन्दू धर्मावलम्बी ब्राह्मण क्षत्रिय आदिहरूसँग प्राय मिल्दछ। आगममा पूजा गर्ने कन्याकेटीको सही (वेललाई कन्यादान दिने) गर्ने र अक्सर विवाहमा दुल्हा जन्ती नजाने आदि केही कुराहरू यो जातिमा अरू हिन्दू धर्मावलम्बी जातिभन्दा फरक पाइन्छ। वेललाई कन्यादान दिइने नेवारका कन्याहरू लोग्ने मरे तापनि विधवा मानिन्नन्। आइमाईले चाहेमा समाजले दोस्रो बिहालाई बहिष्कार गर्दैन। यस अतिरिक्त यस जातिका पति-पत्नीको मेल मिलाप नभएमा खुशीसाथ पारपाचुके गर्ने चलन छ। विवाह अगाडि कन्यालाई दिइएको सुपारी फर्काइदिएपछि विवाहिता नारी फेरि कन्याकुमारीसरह नै मानिन्छे।

# तराई तथा भित्री मधेसका निवासि र तिनीहरूको संस्कृति

## तराई तथा भित्री मधेशका जाति र तिनीहरूको संस्कृति

महाभारत प्रदेशको दक्षिणपट्टिको तराई तथा भित्री मधेश-को भाग दनुवार, दरै, माभी, थारू, चेपाङ् आदिको वास-स्थान हो। यिनीहरूको पनि आफ्नै परम्परा र बोली छ।

*दनुवार, दरै र माझी :—*

नेपालका भित्री उपत्यकाहरू र तराई जगलका छेउछाउमा बसोवास गर्ने दनुवार माझी र दरैहरूको सास्कृतिक र शारीरिक सामञ्जस्यता थारूहरूसँग छ। यिनीहरूमध्ये कसैले आफ्नो उत्पत्ति राजपूतबाट भएको हो र भारतका मुसलमानहरूका अत्याचारले पीडित भएर नेपालको जगलमा शरण लिन आएको भनी चाखलाग्दो कथा सुनाउँछन्। जे होस, यी जातिहरू यहाँ कमसेकम २,००० वर्षदेखि नै बसोवास गरी आएका छन्। यिनीहरूको अनुहार र चालचलन थारूहरूको भन्दा ज्यादा फरक नभए तापनि खेतीपातीमा भन्दा बढ्ता शिकार गर्ने र

माछा मार्नमा यी जातिहरू निर्भर गर्दछन् । ब्यॉसीतिर यिनी-हरूको नजीकमा खेतीवाल वरमु र माटाका भाँडा बनाउने कुमालेहरू बस्दछन् । वरमु र कुमालेहरू दनुवार, दरै र माभी-हरूभन्दा वढ्ता मगोलियन रूपका देखिन्छन् र तिब्बती—बर्मेली परिवारको भाषा बोल्दछन् । वास्तवमा माभी भन्ने नाम तराईका बोटेहरूलाइ पहाडीहरूले दिएका हुन् । यिनीहरू-लाई कुसर पनि भनिन्छ । माभी, बोटे र कुसर एकै हुन् । यिनी-हरू एउटै भाषा बोल्दछन् । पूर्वी नेपालका होचा थुम्काहरू-मा र भित्री मधेश तथा तराईमा गरी यिनीहरूको जनसख्या ११,००० जतिको छ । यस्तै पूर्वीय होचा क्षेत्रहरूमा जम्मा गरी माभीहरूको सख्या ६,००० जति छ । चितवन र यसको होचा जगली क्षेत्रहरूमा बसोवास गर्ने दरैहरूको सख्या पुग नपुग ३,००० जति छ । अक्सर नदीको किनारमा बस्न रूचा-उने यी जातिहरू नदी-किनारमा पराले छाना भएको धुमाउने घर र तराईमा वस्नेहरू रूखका हाँगाबिगाका टाटीवाल होचा छाप्रा बनाएर बस्दछन् । यिनीहरूका छाप्राहरू एक अर्कोसँग टाढा रहन्छन् । दरै र दनुवारहरू शिकारमा मात्र भर नपरी खेतीपाती पनि गर्दछन् । तर माभी-हरूचाहि बिलकुलै नदीमा भर पर्दछन् । माछा मार्ने र काठका मुढकाहरू खोपी डुगा बनाएर नदी तार्ने काम गर्दछन् । मानिस-हरूसग भन्दा जगली जानवरहरूसित बढ्ता परिचित यी जाति-हरू घुमफिर गर्न उति रूचाउँदैनन् । यी तीनै जातिका मानिस-

हरूमा विवाह आपसी राजीखुशीद्वारा हुन्छ। दनुवारहरूमा केटी भगाएर लाने कतैकतै चलन भए तापनि सम्झौताद्वारा विवाह गर्ने स्थितिलाई नै राम्रो मान्दै आएका छन्। बोटे, माझी, र दनुवारहरू फुपुकी छोरीलाई विवाह गर्दैनन् तापनि विधवा भाउज्यूलाई विवाह गर्ने चलन छ। यिनीहरूमा जारी गर्ने प्रथा पनि प्रशस्त छ। थारू, दरै, बोटे, माझी र कुसरमा आपसी विवाह हुन सक्दछ। उनीहरूको मान्यताअनुसार छोरो बाबुपट्टिको समूहमा जान्छ र छोरीचाहि आमापट्टिको जातमा मिलाइन्छे। यी तीनै जातले आफ्नो घरको चूल्हो पछाडि कुल-देवतालाई स्थापना गरेका हुन्छन्। यसले चूल्होमा आफ्नो परिवार बाहेक कसैलाई पस्न दिदैनन्। यिनीहरू वनदेवीको पनि पूजा गर्दछन्। बोटे र माझीहरू जन्म सूतक ४ दिन र मृत्यु सूतक १३ दिन मान्दछन्। दनुवारहरू जन्म र मृत्यु दुवै सूतक १० दिन मान्दछन्। यिनीहरू सबैको लाश फाल्ने चलन छ। दनुवारहरूमा भान्जा अथवा जुवाईंले पुरेतको काम गर्दछन् र दरै र माझीहरूमा बूढापाका तथा अनुभवीहरूले पुरोहित्याइँ गर्ने चलन छ। यिनीहरूको कुनै धार्मिक प्रार्थना र मन्त्रहरू छैनन् र कुनै लिखित भाषा पनि छैन।

*थारू :—*

नेपालको पूर्वदेखि पश्चिमसम्मको दक्षिण समथर भागमा फैलिएको जाति थारू तराईका पुराना वासिन्दा हुन्। बाक्लो

जगलको नजीक बस्न अक्सर यो जाति रूचाउँदछ। थारू जातिको उत्तरी भारतका विभिन्न भाषाहरू उर्दू, हिन्दी, भोजपुरी, मैथिली, बगाली आदि भाषाहरूबाट प्रभावित आफ्नो बेग्लै भाषा छ। थारूहरूको पाँच फीट दुई इञ्च करीव उचाइ, पातलो तर गठिलो शरीर र कालो रग हुन्छ। थारू जातिको उत्पत्तिको विषयमा धेरै प्रचलित कथाहरू छन्। धेरै थारूहरू आफूलाई मुसलमानहरूको हमला हुँदा रातपुतानाबाट भागेका राजपूतका सन्तान ठान्दछन्। यिनीहरू परम्परागत कृषिजीवी हुन्। यिनीहरू स्वभावैले सरल र अनुशासित हुन्छन्। यिनीहरू मुख्यत दुइ वर्गमा विभाजित छन्। प्रधान वर्गमा छ, र अप्रधानमा ३२ उप-शाखा छन्। तर वास्तवमा प्रधान र अप्रधानमा उनीहरू त्यति फरक मान्दैनन्। थारूहरूमा पितृ-प्रधान एक विवाह प्रथा छ। यो जातिमा बाबु-आमाको मञ्जूरीबाट साह्रै कलिलो उमेरमा विहे गर्ने चलन छ। आफ्नै गोत्र बाहेक थारू जातिभित्र यिनीहरूको बिहावारी चल्दछ। गरीब थारूहरूमा विवाह गर्दा साट्ने चलन छ। कम उमेरको केटासँग उमेर पुगेकी केटी बिहा गर्ने चलन यो जातिमा छ। यिनीहरूको बिहेमा कन्यादानअघि दुलहीलाई एक कचौरा विष दिने चलन छ। केही गरी शत्रुको हातमा परेमा आत्महत्या गर्न यो विष दिइन्छ। यसैको आधारमा थारूहरू आफूलाई राजपूतको सन्तान मान्दछन्। विहाको अवसरमा थारूको वर बिरामी भएमा छुरालाई बरको प्रति-

निधिस्वरूप कन्या लिन पठाइन्छ। थारूहरू आपनै जातीय इष्टदेवताहरू, स्थानीय देवताहरू र हिन्दू जातिका देवी-देवताको पनि पूजा गर्दछन्। तर आफ्नै जातीय थारू धर्मलाई पछ्याउनेहरू गुर्वालाई पुरोहित मान्दछन्। यस्ता गुर्वाहरूलाई लालमोहर दिइएको हुन्छ। यी गुर्वाहरूले पुरोहितको अतिरिक्त वैद्य र झाँक्रीको काम पनि गर्दछन्। थारूहरूको घरमा आफ्नै पुखोली कुलदेवताहरू राखिएका हुन्छन्। यिनीहरूलाई काली, भगवती, मैया वा गौरैया भनिन्छ। काली भगवती र मैयालाई बाख्रो चढाइन्छ र गौरैयालाई सुँगुर चढाइन्छ। यी कुलदेवीहरूलाई घरको दक्षिणी कुनामा राखिएको हुन्छ र घरको सबभन्दा जेठोबाठो मान्छे कुलदेवी राखिएको धरोहरमा सुत्दछ। अक्सर तराईका थारू बस्तीहरूमा बरम वा भुईंयारहरू थापिएका हुन्छन्। गाउँको मानिस कोही बिरामी भएमा यी ठाउँहरूमा पूजा गरिन्छ। तराईका पूर्वी भागमा बस्ने थारूहरूको लाशलाई जलाउने चलन छ र बीच मधेस र पश्चिमी चितवन, दाङ, देउखुरी, कैलाली कञ्चनपुर, बाँके, बर्दियातिरका थारूहरूको गाड्ने चलन छ। लाशलाई जमीनमा गाड्दा सेतो कपडा भूईमा ओछ्याएर र सेतो कपडाले ढाकेर मात्रै माटोले पुर्दछन् आशौच ३,५,७ र ११ दिनसम्म बार्ने चलन छ। आशौच बार्नेहरूले साग, सब्जी, तेल, बेसार, मासु, माछा खानु हुँदैन। गुर्वाले तेल दिएपछि आशौच सिद्धिन्छ।

थारू जातिमा सयुक्त परिवारको प्रथा छ र सम्पत्तिको

मुख्य सरक्षक बाबु र घरभित्रको मुख्य मान्छे आमालाई मानिन्छ। जेठो बाबु दाजुको अरू भाईहरूमा अनुशासन चल्दछ र जेठी बुहारीको अरू बुहारीहरूमा चल्दछ।

चेपाङ

समुद्रको सतहभन्दा २५ सयदेखि ४ हजार फीटसम्मको उच्चाइमा पर्ने महाभारत पर्वतमालाको भिरालो जमीनमा बसोवास गरी आएका चेपाँग जातिको सख्या लगभग १६ हजार जति छ। धादिग जिल्लाको दक्षिणी भाग, मकवान-पुरको पश्चिमी भाग, चितवनको उत्तरी भाग र गोर्खा जिल्लाको दक्षिणी भागमा यो जाति सीमित छ। लाम्चो आँखा उठान गालाका हाड, गहिरो डडालीयुक्त चेप्टो नाक, श्यामलो वर्णका मगोलियन परिवारका चेपाङ आफ्नो दललाई पूर्वमा पर्ने दोलखाको सुनाथलीबाट आएका किराँती समुदायका सन्तान सम्झन्छन्।

यिनीहरू तिब्बतेली परिवारको चेपाङ भाषा बोल्दछन्। चेपाङ भाषा राई भाषासँग केही मिल्दोजुल्दो छ। यिनीहरूकै एउटा लोककथाअनुसार यिनीहरू आफूलाई हिन्दू रामायणकी नायिका सीताजीका प्रमुख वशज मान्दछन्। यसअनुसार सीताजीले गण्डकी नदीको आश्रममा वनवासमा छँदा लोहारी नामको एउटा छोरो जन्माइन्। एकदिन वाल्मीकिलाई थाहै नदिई सीताजी नदी किनारतिर बच्चालाई लिएर डुल्न

निस्किन् । वाल्मीकिले कोक्रो खाली देखेर बच्चा चोरियो भन्ठाने । सीताजीलाई दुःख होला भन्ने ठानेर वाल्मीकिले कुशघाँसबाट एउटा बच्चो सृष्टि गरे । सीताजी घर फर्केर हेर्दा कोक्रोमा अर्को बच्चा देख्दा आश्चर्यचकित भइन् । पछि वाल्मीकिले सबै कुरा सुनाएर यी दुवै बालकलाई आफ्नै ठानेर पालन-पोषण गर्ने सल्लाह दिए । कुशबाट उत्पन्न केटाको नाम ऋषिले कुशारी राखे । लोहारी र कुशारी जवान भए । तर एक-अर्काको ज्यानी दुश्मन भएर निस्के । लोहारीको वंशज चेपाङ कहलाए र कुशारीको कुशुण्डा । यी कुशुण्डाहरू पूरै जंगली अवस्थाका आदिम मानिसको प्रतिनिधित्व गर्दछन् । कहिलेकाही बस्तीतिर निक्ले तापनि जंगलमा बस्न रमाउँछन् । जंगली जनावरको शिकार र तरूल म्याकुर आदि कन्दमूलबाट यिनीहरू जीवन-निर्वाह गर्दछन् । रूखको बोक्राले लाज ढाकेर धनुकाँड लिएर हिड्ने कुशुण्डाहरूले चेपाङहरूलाई काँड हान्दछन् भन्ने चेपाङहरूको भनाइ छ । केही चेपाङहरूको भनाइअनुसार चेपाङ र कुशुण्डाहरू ठकुरीसरह हुन् । कुशुण्डाहरू आफै पनि जंगली अवस्थामा छन् र गोरखाको दक्षिणी भाग तथा तनहूँ जिल्लाको दक्षिणी मध्य-भागको जंगलका गुफामा बस्दछन् । चेपाङहरूचाहि अघिदेखि नै सभ्य भएका थिए र उनीहरूकै भनाइअनुसार उनीहरूको चेपाङ राज्य थियो । उनीहरूका ४ राजा थिए । यी ४ राजाहरूलाई पोनी राजा, गील राजा, रिनी राजा र राजी राजा भन्दछन् । यिनीहरूको

साझा राजभवन टुकुमथलीमा थियो र पछि पाटनका राजाले हराएर यिनको राज्य हरण गरे। चेपाङहरूको मुख्यतया दुई पेशा छ। एक थरी चेपाङहरू खेती गर्दछन् र अर्को थरी माछा मारेर निर्वाह गर्दछन्। चेपाङलाई कछारिया चेपाङ भनिन्छ र खेतीपाती गर्ने चेपाङलाई टुकुमथलिया चेपाङ भनिन्छ। सकभर चेपाङ लोग्नेमानिसहरू अचेपाङ स्वास्नी-मानिससँग विवाह गर्न रूचाउँदैनन्। तर चेपाङ जातिका स्वास्नीमानिसहरू अरू जातिसँग प्रशस्त गएका छन्। यस प्रकारका विवाहबाट भएका सन्तानहरू सबै चेपाङमा गन्ती हुन्छन्। बाजा बजाएर जन्ती गएर बिहा गर्ने प्रथा पनि यो जातिमा छ। कन्यादान बिहान गरिन्छ र कन्यादानको शुभ साइतको सकेत गर्न कुखुराको चल्ला भोग दिने चलन छ। कहिले एक शीशी रक्सी र २२ रु० दाम दुलहीका आमा बाबुलाई रीतिअनुसार दिनुपर्दछ। केटोलाई मनपरेकी केटी उसको खुशीअनुसार भागेर आइनभने कुनै उत्सव मेला अथवा खेतमा काम गरिरहेकी वेला पारी केटोले जबरदस्ती तानेर ल्याउन पाउँछ। पक्रेर ल्याएकी केटीले यदि बिहा गर्न मानिनभने उसलाई आफ्ना आमा बाबुको घर फर्कन दिइन्छ। भगाएर वा जबरजस्ती तानेर ल्याएको केटीसँग बिहा गरेपछि दुवैले केटीका आमाबाबुको सम्मानमा १ शीशी रक्सी र २२ रु० दाम लिएर जानुपर्दछ। यति नगरेसम्म यो बिहालाई कानूनी मानिदैन। कछारे चेपाँगहरूको बिहा प्रणाली धेरै

सजिलो छ। केटोले दुलहीको जूठो खाएपछि मुख्य रिवाज पूरा हुन्छ। यिनीहरू छोरीलाई दाइजोमा च्युरीको रूख दिने गर्दछन्। आफ्ना जातीय कुलदेवताहरूको पूजा र नुवाइ खाने उत्सव अतिरिक्त चेपाँगहरू देश, तिहार सक्रान्ति आदि चाड पनि मनाउँछन्। भाद्र महीनाको तेस्रो साता मगलवारको दिन नुवाइको चाड पर्दछ। यो उत्सवमा मरिसकेका पुर्खाहरूलाई नयाँ अन्न र फलफूल चढाइन्छ। यो उत्सव जेठो-पाकोको घरमा मनाइन्छ। चेपाँग परिवारमा कसैका कुलदेवता पहाडको टुप्पामा र कसैका खोलाको मुहानमा हुन्छन्। यिनीहरू आफ्नो पुरेतलाई पाण्डे भन्छन्। धेरैजसो कछारेहरू भीर पहरामा एक अर्कोका भन्दा हजारौ फूट टाढा भुई तले घाँस पातका छाप्राहरू बनाउँछन्। यिनका घरेलु सामानहरू केही माटाका भाँडा र बाँसका टोकरीहरू हुन्छन्। बाँसको टोकरी र घुम बनाउनु च्युरीको तेल पेल्नु, जगलबाट काठ ल्याई आसपासका बस्तीहरूमा बिक्री गर्नु र भीर पखेरोमा केही मकै र कोदो उमार्नु यिनीहरूको धन्धा यतिमै सीमित छ।

●

# अधिराज्यका विभिन्न जाति र लोकसाहित्य

*विभिन्न जाति र नेपाली लोकसाहित्य—*

यसरी आ-आफ्नो बोली, वेशभूषा र सस्कृतिले सम्पन्न भएका यी विभिन्न जातिहरूको आ-आफ्नै लोकगीत र लोक-साहित्य हुनु स्वाभाविकै हो। आ-आफ्नो जातिगत परम्परा, विश्वास र धारणाअनुरूप समय-समयमा निस्केका यिनीहरूको उद्गारले लोकगीतको रूप लिई देशको लोकसाहित्यलाई धनी तुल्याएको छ भन्नुमा अत्युक्ति पनि हुने छैन। यस अर्थमा विदेश लागेपछि मेचीदेखि महाकालीसम्मको मानिस जहाँ गए पनि नेपाली नामले बोलाइने भए भैँ मेचीदेखि महाकाली र हिमाल-देखि तराईसम्मका जुनसुकै जात र धर्मका मानिसले आफ्नो रीतभाँतअनुसार निकालेको उद्गार नेपाली लोकसाहित्य मानिन्छ।

*नेपाली लोकसाहित्यको विशेषता—अनेकतामा एकता—*

यसरी अनेकतालाई एकतामा बाँधी आफ्नो व्यापकतालाई फैलाउनु नेपाली लोकसाहित्यको विशेषता हुन गएको छ। वेशभूषा, भाका र भाषामा फरक आए तापनि नेपाली लोक-साहित्यको मूल आधार एउटै हुन्छ। बञ्चरोको ठ्याकठ्याक, पतकरको स्वऱ्याक स्वऱ्याक, जाँतोको ऱ्याइँ ऱ्याइँ, ढिकीको

ढीक-टीक ढीक-टीक, घट्टको घट-घट, हावाको हुर-हुरी, नदीको कलकल, छहराको छरछर, चरीको चिरचिर, बनडाँडा, हरियाली, हिमाल लेक ब्याँसी, भीर पहरा गरा कान्ह्ला, डोको र नाम्लो, थुन्से र सोली, नोल र खर्पन, टोकरी र ढाकर, ताल र जघार, रह र खोला, पोखरी र पैनी, नहर, कुवा कुलो र कुलेसो, हुडर कचहरी पिढी, अगेनी र चोक, छाप्रो, कुटो र कोदाली, हलो र फाली, बादल, तारा, इन्द्रेनी, तुसारो, तुवाँलो, सूर्य, चन्द्र, शिव र पार्वती, भिन्द्यो र गोसाई, दिवा र थाम, जन्म र मरण, भूत-प्रेत, डाइने-बोक्सी, झगडा लडाइँ, बिछोड, पानी नपरे सुख्खा, रौदी, अनिकाल, फसल, साहूले घरबार खोसेको, खसम परदेश गएको, सौता हालेको, गाउँलेको हेला, नन्दको टोकेसो आदि अनेक तरहका पीर बाधा समाजका कुरीति दुख-सुख आदिलाई गीत-कथा, उखानलाई गाउँघरे दाजुभाइले झिके होलान् । कहिले बूढीले नाति सुताउँदा, कहिले लाहुरिनी पनेरा जाँदा, कहिले डम्फु मादल झ्याली करताल, खैजडी, मुजुरा, मुर्चुंग, एकतारे बाँसुरी, घिने, खिने, बायाँ टिन्छु ढुगानाको रन्कोमा एक डाँडा फारी कुलकुलाइरहेका खोला नालाको अविरल धूनमा सहेलीले गाए होलान् । वास्तवमा यिनै गाउँघरे दाजुभाइ, नथुनी र बिल्टु, चागबा र बाइबा, टुईसि र हाकुचा, कैले र बस्नेत साहिला र साहिलीको हृदय फुटेर आएका चोखा उद्गारले नेपालको सगीतमय हरियाली-लाई ब्यूँताइराखेका छन् ।

*विभिन्न जातीय लोकसाहित्यको विशेषता—*

नेपाली लोकसाहित्यको मूल आधारमा एकता आए तापनि हरेक जातिको आफ्नो आफ्नो विशेषता छ। देखेका र भोगेका वस्तुको कल्पनामा र त्यसको चित्रणमा वास्तविकता र स्वाभाविकता हुन्छ। हिमालको विशालता र उच्चता नदेखेको मान्छेले हिमालको वर्णन गर्न खोज्योभने त्यसले स्वभावैले यथार्थतालाई अँगाल्न सक्दैन। त्यस्तै सागर नदेखेको मान्छेले सागरको गम्भीरता र महानताको बयान गर्न खोज्योभने त्यसमा सच्चाइ पनि आउँदैन। त्यस्तै आजसम्म पनि आधुनिक वैज्ञानिक साधनको उपभोगबाट वञ्चित रहेका भोलाभाला ग्रामीणको हृदयमा आफ्नो मनको भावना पोख्ने स्रोत आफूले देखेका र भोगेका आँखावरिपरिको प्रकृति वस्तुलाई अँगालेर गर्न खोज्नु स्वाभाविकै छ। त्यसैले ५,००० देखि १४,००० हजार फीट अग्लो हिमालमा बस्ने शेर्पा, राई, किराती, लाप्चे, गुरुङ, मगरले आफ्ना गीतकथा आदिमा त्यस भेगमा पाइने जीवजन्तु, चराचुरुगी, हावा-पानी, अन्न, लुगा-कपडा र अनेक चीजको प्रयोग गर्दछन्। जस्तो माथि लेखिएका जातिले कस्तूरी, मृग, र चम्रीगाई, मुनाल र नौरगे डाँफेको, सधैं हरियो धूपी र सल्लाको रूखको, हिमालको, अग्लाअग्ला लेकको, चिसो पानीको बरफको ढिक्काको, हिमाली जडीबूटी र कुटकीको, भेडीगोठ र खर्कको, त्यस भेगमा उम्रने अन्न, जौ, तीतेफापरको हिमालको चिसोबाट बच्न आफूले लगाएको दोचा र बख्खु,

घुमराडी, फेटा र घलेकको, चम्रीको, छिप्रीको, चम्रीको नली-हाडबाट तयार गरेको रक्सीको प्रभावबाट आफ्ना मनका भावनालाई गीतका गेडामा उनेर कथाका पोका फोएर उखान-का झुप्पा केलाएर टुगना डम्फू, मादलमा एक बटुको हुरै र, एक पुङ रक्सी, हिउँको हावाले सुकेको भेडाको मासुको पीठोबाट तयार गरेको एक डल्लो ढिडो खाई झिके होलान्। त्यसमा पनि गुरुङले आफ्नो घाटु नाचलाई र गीतलाई बढ्ता मान्यता दियो होला किनकि यो उसको विशेषता हो। त्यस्तै राई र किरातीले मुन्दुम र च्याब्रुमुलाई अगाल्यो होला। अनि तामाग कान्छोले ह्यागको कथा शुरू गरेको वेला डम्फुले नाक उठायो होला। त्यस्तै हरियो डाँडामा पाखामा पखेरामा बसेर खोरिया बिराउने ब्याँसीमा खेती गर्ने सेते ठकुरी हरिदत्त तिवारी वहुने काइले रिट्ठे हलीचाहि गाई भैंसी बोका बाख्राको, तित्रा प्यूरा चाँचर कालिजको, सुगा सिमलचरीको, कुटमिरो बर पीपल चिलाउने फलाँट गुराँस बकैनो निगालो आदि रूखको खगालो बर्की गुन्यो र चोलो कछाड र दौराका त्यस भेगको अन्न मकै कोदो भटमास धानको तरेली परेका कान्ह्ला गराको गाउँघरे पिढी आँगन र पराले झुप्राको प्रभाव चुटके र मादले गीतमा झिक्यो होला। पनेरामा उखान चल्यो होला। अगेनीमा कथा बेऱ्यो होला। त्यस्तै शहरका श्रमजीवी किसान ज्यापूको घरमा घरबुने लुगाको, भिन्द्योको बेलसग विवाहको, पारपाचुकीको, गुफा पसेको, कालीमाटी झिकेको, लसुनको खेती, कर्कलो, आलु,

चम्सुर र पालुगो, धान र गहूँको, पटुवा र लको भदगाउँले टोपीको वयस बाँसुरीमा चल्यो होला। अनि हाकुचा, भुयूचा, ट्युसिगले सिलुमे र ब्याँचली, घिमिरे, टिन्छु बाँसुरीमा झिक्यो होला। अनि खड्गयात्राको बयान, लाखेको नृत्य, बाँसको लिगोमा चमर डोलाउँदै हिडेको, कठीचा नृत्य र देवीनाचको बयान धर्नासिहले गर्‍यो होला। देउसी खेल्न सेते ठकुरी तम्सेको देखेर हरिदत्तले बालनको चुटका झिक्यो होला। त्यस्तै तराई-को तेली थारू दनुवार मैथिलीले मुजुर नीलकण्ठे गैडा, बाघ भालू, लघुनार र खरायोको, धान तोरी रहर मूँग लहलह खेत हरा-भरा गराको, धोती र कमीज, कट्टू र गम्छाको दैनिक खाना, सत्तु र पानी, दहि र च्यूरा, दाल र भात, गोभी र भण्टाको प्रभाव एकतारे र ढोलकमा फुक्यो होला। अनि थारूले जगल फाँडेको सबै परिवार मिलेर बस्न बनाएको टहरो र घरबाहिर राखेको माटाका देउताको कथा भन्यो होला। त्यस्तै दनुवारले थाल नाच झिकेको भए मैथिलीले झिजिया नृत्य शुरू गरी आफ्नो विशेषता देखाए होलान्। यसरी विभिन्न धर्म र जातको बसोबास भएका नेपालका नेपालीहरू आफ्नो धर्म परम्परा रीति स्थिति रहनसहनलाई अँगालेर प्राकृतिक सौन्दर्यमा रमाउँदै आफ्ना मनका भावनालाई लयमा बाँधेर पोख्दछन्।

*नेपाली लोक साहित्यको सौन्दर्य—*

यसरी नेपाली लोक साहित्यलाई नेपाल र नेपाली समाजको

वास्तविक दर्पण हो। भन्न सकिन्छ यसद्वारा यस देशका मानिसको मानस स्थिति र सभ्यताको अध्ययन गर्न सकिन्छ। हरेक समाजको जरादेखि नै टुसाएर विशाल बन्ने गुण ओगटी लोकसाहित्य मौलाउँदछ। लोकसाहित्य भन्नेबित्तिकै सर्व-साधारण वा सादा जनता देखा पर्दछन्। नेपाली लोकसाहित्य भन्नेबित्तिकै पनि यसैले नेपालका जन-साधारणका गीत कथा उखान टुक्का आदि समावेश हुन्छ। हिमालयको चिसो पानी पिएर स्वच्छ वातावरणमा हुर्केका भीर, पखेरा, थुम, खर्क, प्रगन्ना, मौजा, लेक, ब्यॉसीमा, खेतीपाती बन्द-व्यापार गरेर बस्ने भावुक सरल तथा सरस हृदय भएका गाउँघरे दाजुभाई दिदीबहिनीको हृदय फुटेर आएको चोखो उद्‌गार नै नेपाली लोकसाहित्य हो, नेपाली साहित्यको एक महान् अग हो। वास्तवमा भन्ने होभने लोकसाहित्य हरेक समाजको सुख दुखले भरिएको एक मौखिक इतिहास र अलिखित काव्य कुञ्ज हो। नेपाली लोकगीत नेपाली गाउँघरे भावुक हृदयको स्पन्दनशील लयदार कवितामय सामूहिक ध्वनि हो। जीवनको कटुतामा मनोहरताको मलम लगाउने, सुमधुर सगीतको आड मा सरलता नै प्राण भएको स्वत प्रस्फुट हुने ग्रामीण हृदयको झकार हो। अरूहरू देशको लोकसाहित्य झैं नेपाली लोक-साहित्यको पनि छुट्टै पन छ। नेपाली लोकसाहित्य आफ्नो पनले भरिएको आफ्नो गेडामा उनिएको आफ्नो भाकामा मुछिएको र आफ्नो भाकाले सिगारिएको हुन्छ। समय समयमा

वृक्षमा मुना लाग्ने झर्ने गरेझै नेपाली जनहृदयमा सुखदु खका मुना झर्ने र पलाउने गर्दछन् । जिब्राका टुप्पामा अडेर पुस्तौ-सम्म पनि जीवित रहने नेपाली लोकसाहित्यमा नेपालको तेजस्वी आत्मा लुकेको हुन्छ । नेपाली लोकसाहित्य कुनै बन्धनले बाँधिदैन । जनहृदयमा झट्ट जस्तो प्रभाव पर्दछ त्यसैलाई भाका भाषा र गेडामा गुँथेर वास्तविकताको यथार्थ चित्रण गर्ने नेपाली लोकसाहित्यको विशेषता हो । नेपाली लोकसाहित्य अविरल बग्ने खोला झै नेपाली जन-जीवनको अनुभूति र उद्गार बोकेर अटूट बगि नै रहन्छ । हावालाई दूत बनाउनु, पशुपछीसग मितेरी गाँस्नु, रूख झारपातसग कुरा गर्नु इत्यादिले नेपाली ग्रामीणको सरल हृदय र हरेक विषयमा माया गाँस्ने मयालु स्वभावको परिचय दिन्छ । नेपाली लोकसाहित्यको सृष्टि विशेष गरी ढिक्की, जाँतो बन-पात गर्दा जात्रामात्रा जाँदा, खेप, गर्दा, रोदीघर पस्ता गाउँका मानिस जम्मा हुँदा हुन्छ । प्राय जुनसुकै वेला पनि गीत गाइन्छ । नेपालो लोक गीतमा नृत्य मिलेको हुन्छ । बढता मात्रामा चुटकिलो, छरितो र छोटो गीत हुन्छ । असारे, कर्खा, कथानक गीत र सगिनी आदि बाहेक अरू कमै मात्रामा लामो गीत गाउन सकिन्छ । बढी मात्रामा भाकाले गेडालाई छोप्ने हुँदा र कतै अन्त्यानु-प्रासले गर्दा माथि या तल्लो पक्तिले मात्र तथ्यको बयान गरेको हुन्छ । त्यस्तै उखानटुक्काभा सरल ढगबाट नियम उपदेश दिइन्छ । गाउंखाने कथामा बौद्धिक ज्ञान सिकाइन्छभने लोक

कथामा व्यवहारिक गुण सिकाउँदै शिक्षा दिइन्छ। लोक साहित्य पुस्तौदेखि एकपछि अर्कोले केवल सुनेको भरमा जनजिब्रोले जिलाइराख्दछ। यसमा कुनै रचना र सिर्जनाकार देखा पर्दैन, त्यसैले लोक साहित्य सधैं बेनामी हुन्छ। नेपाली लोक साहित्यका कुनै पनि उम्दा गुण र सौन्दर्यलाई कुनै पनि मेचीदेखि महाकालीका नेपालीले मेरो भनेर त्यसमा गर्व गर्न सक्दछ। नेपाली लोकसाहित्य भन्नेबित्तिकै भोटो र कछाड पटुका बाँधेर आलुको खर्पन बोक्ने सानुमान, खगालो र दौरा लाएर डोको बोक्ने बहने काइलो, दोचा र बख्खु लाउने आँग बाबु धोती र गम्छामा एक टोकरी भण्टा बोक्ने नथुनोको चित्र हाम्रो अगाडि आउँदछ। यही नै नेपाली लोकसाहित्यको विशेषता हो र यसैमा नेपाली लोकसाहित्यको सौन्दर्य निहित छ।



# नेपाली लोकगीत

## ( क ) नेपाली लोकलयको उत्पति र त्यसको प्रसार

मानिस आमाको गर्भबाट झरेदेखि उसले हृदयमा उकुस-मुकुस भएका भावना सुखदु खलाई स्वरमा घोलेर पोख्दछ। जब मानिस जगली अवस्थामा थिए त्यस वेला उनीहरूले जगलका भयकर जीवजन्तुसग लडन्त भिडन्त गर्दा 'हुहु र हाहा' को सगीत झिके होलान्। मानिसले बनमा चराचुरगीको आवाजबाट साइसाइ र सुइँसुइँ, चाइँचाइँ र चुइँ-चुइँको सगीत-लाई अपनाए होलान्। जब चेतनाको तह बढ्दै गयो तब दाउरा काट्दा निस्केको टयाक टयाकबाट नयाँ स्वर र सगीतको सृष्टि गरे होलान्। नेपालीहरू बर्ता सगीतप्रेमी हुनको कारण घुम्तीमा अविरल गतिमा सुसाउने खोला छाँगा र छहराको सगीतमय ध्वनि बालखकालदेखि परेको प्रभाव बनमा जाँदा चराचुरुगीको चिरबिर आदिबाट परेको प्रभावबाट र देशको प्राकृतिक वातावरणले नेपालीलाई संगीतप्रेमी बनायो होला। हुन पनि नेपालीहरू गाएरै जन्मन्छन्, गाएरै बढ्दछन् काम गर्दछन्। नेपालीहरू कुनै पनि नयाँ सगीतको चाहना गर्दछन्, त्यसमा रमाउँछन् त्यसलाई समाउन कोशिश गर्दछन्। भेडागोठ सार्दा, नून किन्न जाँदा, माइती घर आउँदा, लाहुर

जाँदा, जात्रामात्रामा जाँदा, मेलापात भर्दा, बस्ती सर्दा, खेप जाँदा, रोदीघर बस्ता विभिन्न जाति र समुदायसंगको सम्पर्क र नयाँ ठाउको आवागमनले नयाँ नयाँ लयको उत्पति भए होलान्। वैज्ञानिक साधन कम भएर केवल उत्साहको भरमा ढीठ मानेर सुनेको भरमा जिब्रोको टुप्पोको सहाराबाट लय समाउँदा एक पारको लय एक गाउँबाट आर्को गाउँ पुग्दा आर्कै भएर रहरलाग्दो नयाँ लय सृष्टि हुन्छ। सायद यो गीत कुनै धनकुटे युवक या युवतीले बस्तुभाउ लिएर वन जाँदा या फर्कंदा हातमा लिएको सिप्कनो भाँच्दै वरपरका आफ्ना साथी भाइ-लाई हेर्दै आफ्नो हृदयको भावना यसरी पोख्यो होला ?

*झ्याउकिरि रोयो बन थर्काई हो।*
*कहाँ गयो माया मन फर्काई,*
*लौ लौ रे माया लौ लौ।*
*हिमालचुली के जस्तो हो ?*
*मालिमा गाईको दूध जस्तो।*
*सगरको जून के जस्तो ?*
*बैसालु ज्यानको रूप जस्तो।*
*लौ लौ रे माया लौ लौ।*

यो गीतको भाकाले पारि गाउँको भैंसी खेपमा आएको एक युवकलाई गीत गाउन र त्यो भाका छोप्न कुतकुतायो होला। तर जिब्रोको टुप्पाले समाएको नौलो भाका अलमलिदा त्यो

आठराईको युवकले आधा भाका छोप्यो होला आधा आफ्नै ढबसँग मिल्न गयो होला ।

*बादल उठ्यो मेघ ड्याम्म*
*लहराले रूख भ्याम्म*
*गहुन काटी ठोसर छ*
*नरो त भन्ने को हुन्न से सैला*
*पानी र भरी निरछाया*
*तिम्रो र हाम्रो जलमाया*
*लौ हजूर रुमाल खसाल से सैला*

त्यो आठराईको उत्साही युवकलाई हिजोको भाकाले अझै समाएको थियो होला । अनि ऊ .आर्को दिन बन पस्दा तितर-बितर भएका वस्तुभाउलाई हातको लौरो हल्लाउँदै ओह्रा-लोमा यस प्रकारले हैं हैं भन्दै झऱ्यो होला, हाँ, हाँ, हाँ, हाँ, हाँ, हाँ, भन्दै वस्तुभाउलाई एकत्रित गऱ्यो होला, अनि ओह्रा-लोमा अघिअघि झरेकी युवतीलाई देखी यही भाकामा गीत भन्न खोज्यो होला ।

*बहर गोरू दाउँ त*
*नलाउने माया लाउँ त*
*सिरीमा सिरी विरसनी*
*संझाउने र बिर्साउने कुरकुर ।*

यसो भन्दै कान्छो बन पुग्यो होला, बनमा गाईवस्तु र नीलो एउटा रूखमुनि सियाँल ताप्न बस्यो होला अनि र्दा गोर्खाबाट

मादल ठोक्दो होला, आर्को नाच्न थाल्यो होला, उसले माया घर जाँदा जानेको भाका यसरी झिक्यो होला ।

*रातोमा धागो तूल जस्तो*
*हितकी ठूली कान्छी त*
*टिपेर ल्याउँ ल्याउँ फूल जस्तो*
*बिर्सने मेरो मन कस्तो*
*कुरकुरे रेसम चमचम*
*हो है कुरकुरे रेसम चमचम*

नाच्दा नाच्दै सानीले पनि आफ्नो माइती घरमा जानेको भाका नृत्यमा मिल्ने गरी यसरी झिकिहोली ।

*डाँडामाथि पिप्पले छायाँ*
*छाडी जाने साथीको के मायाँ !*
*बरको छायाँ पिपलको छायो*
*करमको के छायाँ !*
*बाटामा भेटे पुतली जस्ती*
*घरको के मायाँ !*
*आँसु काढी नरोए माया*
*घर छाडी जानेलाई सम्फेर ।*

नकलीको यो भाकाले दिदी भेट्न आएकी रामेछापकी सानीकान्छीले आफ्नो गाउँको भाका यसरी झिकिहोली ।

युव[illegible] *भातै र खाने त्यो राम सैली धानको*
तर जिब्रोको [illegible]ध *खाने थोरेको रेसम*

*हातमा खरु जसो होला बरु*
*जान्छु डाँडो काटेर रेसम*
*पानी र पर्‍यो त्यै रिमिझिमी*
*हिउँ पर्‍यो थुम थुमैमा*
*एक डाँडा तिमी एक डाँडा हामी*
*माया छ कुमकुमैमा*
*रातो र माटा खनी र खोत्री*
*तरुलेको ठुन्को*
*जोखौं तुलौं भरौं माथि*
*कसको न माया ठूलो :*

छ सत्यनारायणको
सानी कान्छीको यो नयाँ भाका सुनेप[illegible]को भाकालाई यसरी
पूजामा मामाघर गएको रिठ्ठेले त्रिशूली
झिक्यो होला—

*माहिला*
*घारिमा साहिला घारिमा*
*वनकेराको घारी [illegible]इन*
*हाम्रो त घर यहाँ [illegible]गापारि*
*त्रिशूली [illegible] देउता माहिला*
*देउता साहिं[illegible]को देउता*
*हिमा[illegible] सबै जना*
*लान्छु भ[illegible]लहनमा एउटा*

[illegible] नौलो
[illegible]दा गोर्खाबाट

*घारिमा साहिँला घारिमा माहिला*
*वनकेराको घारी*

यसै गरी चुटके भाका र मादले भाका, बालन भजन, -असारे र दोहरी मारुनी र मादले गीतहरू निस्कन थाले होलान्, अनि पश्चिमा गीत पूर्वमा शुरू भयो होला, पूर्वको पश्चिममा पुग्यो होला।

हेरौं पश्चिमी गीतको धुवा। पूर्वको एक केटा पश्चिम मनकामना जाँदा कुनै घरमा वास बसेको थियो होला। आँगनमा पुग कातेर बसेकी एक युवतीले यसरी गुन-गुनाइहोली।

*बरको छायाँ पिपलको छायो*
*कर्मको के छायाँ!*
*बाटैमा भेटे गुतली जस्ती*
*घरको के मायाँ!*

एक सुरमा उसले आफ्नो प्रियतमलाई सम्झेर पारि काल्ला-मा भयाउँकीरी बासेको सुनेपछि त्यही झ्याउँकीरीलाई गीतमा ेर सन्ध्याको वर्णन यसरी गरिहोली।

*झ्याउँ झ्याउँ झ्याउँकीरी बास्यो*
*अँधेरोले डुबायो पँधेरो,*
युवकले *आएनौ पापी*
तर जिब्रोको टु *ग हालेर सुस्केरो।*

अचानक उसले यो पारले गाएको सुनेर उसको पूर्वमा दिएकी दिदीकी छोरीले आफ्नो गाउँको भाका यसरी झिकिहोली ।

*डाँडामाथी पिपले छायो,*
*छाडी जाने साथीको के मायो!*

सानीको गीतलाई च्याण्टीले यसरी छोपिहोली ।

*छ कि मायो तैपनि भनी ।*
*डाँडा काटी आएको म पनि ॥*

यस प्रकार गीतको उठान भएको सुनेर तही पालीमा वास बसेको दैलेखे युवकलाई पनि गाउन मन लाग्यो होला अनि उसले आफ्नो गाउँको भाका सबैलाई लोभ्याउने गरी झिक्यो होला ।

*रेसमले नानी, यो पिरती लाउँला,*
*याली बनैमा ।*
*रेसमीले नानी पानी पर्‍यो रिमोझिमी,*
*रानी बनैमा ॥*
*रेसमले नानी छाताले तर्काउँला,*
*याली बनैमा ।*
*रेसमले नानी यो पिरती लाउँला,*
*याली बनैमा ॥*

एक कुनामा बसेको दैलेखे युवकले मीठो स्वरमा नौलो भाका झिकेको र उसको गीतमा सबै रमाएको देख्दा गोर्खाबाट

झ्याङ जान आएको साने गुरुंगले आफ्नो गाउँको भाका यसरी झिक्यो होला ।

*सुन्दर ज्यू गर्नैं पऱ्यो रमाइलो रमाइलो जैहरि रुमालैमा*
*सेतोमा कागज रातोमा मसी*
*लेखने कलम कलम जै हरि रुमालैमा*
*आमालाइ सेवा बुबुलाई खेवा*
*हजुरलाई सलाम सलाम जै हरि रुमालैमा*
*मधेसेको दम्बारैमा सुन्दरज्यू*
*बाघ माऱ्यो गुनेले गुनेले जै हरि रुमालैमा*
*सुन्दरज्यू गर्नैं पऱ्यो रमाइलो रमाइलो जै हरि रुमालैमा*

साने गुरुगको यो नाचुँ नाचुँ लाग्ने भाका सुनेपछि ससुराली आएको पालपाली वीरेलाई पनि आफ्नो गाउँको भाका झिक्न मन लागेर आफ्नो गाउँको भाकाको मेलो यसरी साऱ्यो होला ।

*घाँटीमा फूलको माला*
*कर्म भए यो जोवन काहाँ जाला !*
*प्रवासको चिसो हावा*
*पिपलुको छायाँ !*
*कल्लाइ सुनाउँ गीत मैले*
*कल्लाइ दिऊँ यो मायाँ !*
*घाँटीमा फूलको माला*
*कर्म भए यो जोवन कहाँ जाला !*

चन्द्रै मगरले धेरै काल तराईमा बिताएकोले एकतारेको धूनमा कसैले रचेको एक गीत गायो होला ।

*बाउसे गर लाठेहो ,*
*आफ्नो आफ्नो देशलाई ।*
*डवल चुराका छन्छन् तालमा ,*
*धरतीलाई व्यूँझाई ।*
*सारन युवती स्नेहको बैनी,*
*प्राण र प्यारको गीत सुनाई ।*
*बाउसे गर लाठेहो,*
*आफ्नो आफ्नो देशलाई ।*

चन्द्रे मगरले तराईको भाका झिकेपछि मनकामना जान घरबाट हिंडेको काल्चाले काठमाडौंका नेवार जातिले गाउने व्याचली र बाह्रमासेको मेलो सान्यो होला तर उसले नेवारे भाषामा सारेको गीतको धुवा पर बसेको धनबहादुरले बुझ्न सकेन भनी उसंगसगै गएको हरि श्रेष्ठले नेपालीमा अनुवाद यसरी गऱ्यो होला ।

*हे सखि श्यामजुको दर्शन होला कि !*
*भोलि बिहान उठेर हेरि मात्र रहुँ कि !*
*सधैं आउने त्यो ठाउँको गोठाला गयो कि ,*
*है सखि तिमी गई हेर्नु पऱ्यो कि !*
*कतिको फसाद दिन लाग्यो कृष्ण ,*
*दर्शन देऊ मलाई करुणा राखेर ।*

*चैत्रमा फुल्यो बनमा जाई फूल,*
*वैशाख चुवा फूल गुलाफ नीलो फूल ।*
*भरिआयो बसन्तको यौवन,*
*कसरी सहुँ प्रियविना मैले ।*

यसरी कालुचाले व्याचली र बाह्रमासे गाएको सुनेपछि पारि कुनामा बसेर भात पकाउन लागेको भुयुचाले चैत्र महीनामा कालीमाटी खन्न जाँदा कालीमाटीले पुरिएको छोरालाई सम्झेर यो गीत गायो होला ।

*अबु जुया नुगल मछिना,*
*मत ज्वना मालावन ।*
*कंगाले ह्यंुया स्वंयां,*
*जिकायया पाली निपा खनेदत ।*
*अबुजुया मि वुग दाया खेया,*
*जिकायया ख्वाल गन बना स्वया ।*

बत्ती लिएर छोरा खोज्न गएँ, कालीमाटी झिक्ने खाल्डो खोल्नेर हेर्दा छोराका दुइटा पैताला देखिए छोराको मुख कहाँ हेर्न जाऊँ भनेर बूढाले गाएको सुनेर यस्तो वेलामा यस्तो गीत गाउनुपर्छ भन्दै त्यो बैसको बोझले नुहेको नन्दलालचाले काठमाडौं उपत्यकाको रसिलो गीत गाउन थाल्यो ।

*राजामति कुमति जिके बसा पीरती*
*हया ब्यू राजामति चा,*
*खेंखोला ध्याकूबे दं, पस बजी धूदँ*

*राजाभति मूलुसुलुदं*
*सॅ धासा कुलीकुली मिखा धासा बाला तिला*
*सक्कमिया ह्याय् मचाला ।*

यसरी काठमाडौबाट आएका नन्दलालचा आदिको गीत सुनेर भोजपुरे राईले चण्डी पूर्णेमा भिक्ने मुन्धुम यसरी झिक्यो होला । वास्तवमा मुन्धुम राईहरूको वेद भने पनि हुन्छ ।

*साख्य कू तुलुंगकुम*
*रोथुंम पारे हांग सुगनिगया*
*मखिदे लाली साउने*
*भांगी माच्यो दोलो कुम्दो*
*मांग चांग सुंमने वारा डोला ।*

चण्डेश्वरीमा आएर हामीले मात्र आएका विश्व रचनाकार उनै महादेव-पार्वती हुन है, नाच्ने किन्नर-किन्नरी भगवानलाई हृदयमा राखेर हामीले नाच्नुपर्दछ नि भनी लचिकलो भाकामा भोजपुरे राईले मुन्धुम गाएको सुनेर तराईको लल्लु कलवारले आफ्नो गाउँमा आँपका मुजुरा चलेपछि पहेला धोती लगएर सबै मिली रमाएर होरी खेलेको होलीको गीत यसरी गायो होला ।

*होरी खेलत श्याम जुगल जोडी ,*
*किन कहि हाथ कनक पिचकारी ।*
*किन कहि हाथ अबीर झोरी ,*
*रामजिके हात कनक पिचकारी ।*

यसरी लल्लु कलवारले होरी गीत गाएको सुनेर आफूले

असारमा धान रोप्दा गाएको गीत सम्झेर सप्तरी डिमनकी रघुनीकी स्वास्नी यसरी गाउन थाली होली ।

*हो बाबा हाम रोपै छपछप धान ,*
*पशुपति तोछह पशुकेरे मालीक ।*
*हम छी गरीब किसान हो बाबा···*

यसरी रघुनीकी स्वास्नीले गाएको सुनेपछि दाग देउखुरीको दगौरा थारूले माघी गीत संझेर त्यसमा नयाँ पन दिदै गायो होला ।

*पतियातो तुमरी माली रे माली,*
*नैनी तोरी अनमोल ।*
*जमुना जोरी तुमरे जाडी ,*
*बड़े रसले जिया लैले ।*

एवम् प्रकार एक गीतको लय मेचीबाट कोशी र कोशीबाट मेची पुग्दै प्रसार भएर नयाँ नयाँ भाकाको सृष्टि गरिएको होला ।

## ( ख ) रोदी-घर

रोदीघर नेपाली गाउँघरे दाजु-भाइ दिदीबहिनीको मन बहलाउने मनोरञ्जन-गृह हो । रोदी यो गुरुङ भाषा हो र यसको अर्थ हो नाच्ने र गाउने घर । प्राय. यसको चलन गुरुङ जातिमा बढता हुन्छ तापनि यसले आफ्नो व्यापकतालाई मेचीदेखिन् महाकालीसम्म पुऱ्याउन लागेको छ । रोदीमै

विभिन्न लोकसाहित्यको सृष्टि हुन्छ। यही नेपाली सरल हृदय भएका ग्रामीणहरूको मुटुको वेदना फल्दछ। आपसमा आत्मीयता बढाई मन बहलाउने रोदीघर, गाउँका मान्छेलाई पायक पर्ने ठाउँमा तयार गरिएको हुन्छ। दिउँसोभरि काम गरी थाकेर घर आएका जोशिला नवयुवक युवती रोदीको दैलोमा हूल बाँधेर जम्मा हुन्छन्। रोदीको सघार काटेर भित्र पसेपछि कसैले कसैलाई भेदभाव गर्न पाउँदैन, कसैले कसैलाई वासनाको आँखाले हेरेर करकाप गर्न सक्दैन, सबैले सबैसग दाजु बहिनीको व्यवहार गरेर हाँसखेल गर्न र सुखदु ख पोख्न पाउँदछन्। निद्रा नलागुञ्जेल नाचगान गरेर आफ्नो घर फर्कन्छन्। रोदीमा युवक-युवती गीत गाउँदछन्भने बूढा बूढी उखान हालेर हाँस्दछन्। बूढी आमै पुवा कात्दै नातिलाई गाउँखाने कथाको थेगो सुनाउँछिन्भने माइती आएकी चेली लोककथाको मेलो सार्दछिन्। यसरी नै रोदीमा लोकसाहित्यको हरियो मुना पलाउँदछ। नेपालको यस प्राकृतिक हरियालीमा लुटपुटिएका भावुक ग्रामीणको जीवनमा प्रेम र विरहका गीतले पनि उत्तिकै स्थान पाएको छ। समय समयमा गाइने गीतको अलावा नेपाली लोकगीतमा देउडा, जुहारी, देहरीले परिचित अपरिचितलाई भुलेर प्रेमको बारीमा सगीतमय हेलो गलादार फालीले गोडी भावनामय सगीतको रन्कोमा प्रेमको फूल फुलाउँदछन्। सरल तथा सरस हृदय भएका भावुक ग्रामीणहरू गाएरै हुर्कन्छन्, गाएरै काम गर्दछन् गाएरै मर्दछन्। जुहारी

खेल्दा माथि लेकबाट कानमा हात राखी गीतका धुवा उठा-उँछन्, वारि डाँडाबाट पारि डाँडामा ठक्कर खान पुगेको झङ्कृत स्वरले पत्थरको दिलमा पनि प्रेम र सहानुभूतिको लहर चला-उँदछ। आफ्नो स्वच्छ हृदयको परिचय दिदै गीतका गेडा झर्न नपाई भाका छोपेर जवाफमा भट्ट्याउनु नेपाली लोकगीतको एक विशेषता हो। सातौ दिनसम्म पनि गीतैमा जवाफसवाल गर्नु गीतैबाट दिल जाँची जीवनभर सगै बस्ने प्रण गरेर सम्बन्ध राख्नु नेपाली सरलपनाको निख्खरा परिचय हो। धर्मको आधारबाट जातीय चलनअनुसार यहाँका धेरै युवकयुवतीहरू आपसमा घुलमिल गरेर आफ्नो मनको बह पोख्ने अवसरबाट पछि परे तापनि नेपाली गाउँघरे दाजु भाई दिदी-बहिनीले आफ्नो चाहनाको पूर्तिको लागि रोदीघरको सिर्जना गरेका छन्।

रोदी पसेको एक तामाङ युवक हातमा लिएको डम्फू बजाउँदै एउटी बैसालु युवतीको रूपको वर्णन गर्दछ। साथै प्रेम गर्न प्रस्ताव राख्दछ।

*हिमालचुली के जस्तो,*
*बैंसालु ज्यानको रूप जस्तो।*
*सगरको जून के जस्तो,*
*मायाको गोल मुख जस्तो।*
*वरपिपलको चौतारो,*
*चारै सुरमा बिसाउने।*

*कोरेलो बोलचाललाई ,*
*रिसाउने कि सुखाउने ।*

यसरी आफूलाई एक युवकले हाँक मारेको देखेपछि बैसको बोझले नुहेकी युवती जवाफ दिन किन पछि पर्दथी ।

*फूलको माला उनौली ,*
*शीतको थोपा नझारी ।*
*मरेर जाने जुनिमा ,*
*बोल्नलाई केको रिसाउने ।*

युवतीले हाँसेर जवाफ दिएको सुनेपछि युवक यस्तो भन्दछ ।

*लेकको चम्री चरन ,*
*संगसंगै होला मरन ।*
*कलिलो मन हँसाउ त ,*
*माया र प्रीति बसाउ त ।*

जवाफ दिनलाई गडेर र गमेर सुनिरहेकी युवती युवकको गीत सकिन नपाउँदै यसरी गला फुटाउँछे ।

*जिन्दगी हो है घामछायाँ ,*
*बैसमा लाउने हो मायाँ ।*
*नफुक्ने गाँठो कसेर ,*
*माया र प्रीति जोरेर ।*
*सँगसँगै मरौं हाँसेर*

यस्तै अर्का थरी युवक युवती आफ्नो परिचय दिन लागि-

रहेछन् । यसमा एक युवक आफ्नो अगाडि हाँसिरहेकी युवती-लाई देखेर उनको नाउँ र गाउँ सोद्धछ ।

*घर कहाँ बैनीको नाम*
*बैरागीले सँकुला जान्न कि ?*

एक युवकले अचानक आफ्नो नाउँ र गाउँ सोधेको सुने-पछि गीत गाउन पछि नपर्ने युवती आफ्नो परिचय दिएर उसको परिचय माग्दछे ।

*घर मेरो धौराली डाँडा*
*नाउँ मेरो लेकाली साहिली हो ।*
*दाइको घर कुन गाउँ होला—*
*डाँडापारि कि डाँडावारि हो ?*
*दाइको घर के कति जहान*
*गाई वस्तु गोठका भनन ?*

यसरी ती युवतीले आफ्नो नाउँ गाउँ सोधेको सुनेपछि युवक जवाफ दिन्छ ।

*घर मेरो सिम्लेको फाँट*
*नाउँ मेरो अन्तरे माहिला हो ।*
*चार गोरू दुइ बाख्रा छन् ।*
*पाँच गाई दुई भैंसी लइन*
*आमाबाबु दुवै छन् मेरा*
*भाइ तीन बहिनी चार जना ।*

आफ्नो परिचय दिएपछि उतापट्टि हाँसेर सुनिरहेकी युवती-को बैसमा मक्ख परेको युवक प्रीति गाँस्ने हो कि भनेर सोद्धछ।

*बहिनीको के सुर छ अब,*
*लाउने हो कि पीरती गाँसेर ?*

नाउँ घर सोधेर उसले प्रीति लाउने प्रस्ताव राखेपछि युवती आफ्नो मयालु हृदयको परिचय यसरी दिन्छे।

*फूल हेर्नु मयालु आँखाले*
*टप्प टिपे गइहाल्ला सुकेर।*
*मुनालाई नभाँच हातले*
*वैली जाला घामको धूपले।*

युवतीले यस्तो पारले जवाफ दिएको सुनेपछि त्यो युवक अलि गर्माएर छेड हान्दछ।

*मधेस ज्यानको लहरे पीफ वैलायो धूपले*
*यत्तिका बैसमा घरबार छैन के गर्नु रूपले।*

यसरी आफूलाई उसले छेड मारेको सुनेपछि ऊ पनि यसो भन्छे।

*कौवालाई भन्दिनँ चाँचरी,*
*दाइ भन्नेलाई पोइ भन्ने कसरी ?*
*लाउन्नँ माया नलाउन कर,*
*यो जुनि त अरूको भैसक्यो।*
*यो समाचार लगिदे चरी,*
*घरमा तेरी राइ रहिछ भनेर।*

उसका यस्ता बिलौना सुनेर ऊ जस्तै खसमको बिछोडमा बमको रापले पिल्सिएकी एक युवती यसो भन्दछे ।

*आकाशको नौलाखे तारा मेरो राजा म गन्न सक्दिनँ*
*पेटको कुरा मुखमा ल्याई मेरो राजा म भन्न सक्दिनँ*
*दिन गयो गनेर औंली बैस सुक्यो भएन चइन*
*फेरि पनि आउला कि मलाई लालु पाते फूलको जोवन*
*पन्छी भए उडेर जान्थें बादलमा सिंगौरी खेलदै*
*सय खोला नौ डाँडा काटी खोजी हिंड्थे*
*तिमीलाई बोलाउँदै ।*
*विरहले मन पोल्छ सधैं सुक्यो पानी आँखाको नानीको*
*क्यै पनि रहेनछ माल बगी जाने आँखाको पानीको ।*

अनि अर्कातिर पनि एक युवती लडाईंमा गएको आफ्नो खसमको विरहमा यसो भन्दछे ।

*घर मेरो डाँडामा, मेरो घरको पुर्वा त*
*गयो जर्मन लडाइँमा*
*न है चिट्ठी आउँदछ, न है ज्वान आउँदछ*
*यो ज्यूको मेरो झाजरू, नरो भन्ने को हुन्छ ।*

यसरी धेरै युवक युवतीले आफ्नो मनको बह पोखेको देखेर बैंसमा लोग्नेसँग छुट्टिएकी युवती एक कुनामा बसेर पुवा कात्दै यसो भन्दछे ।

*बाँच्नुभन्दा मर्नु छ निको*
*बैरागीले जहर पिएर*

*वारि पारि दुइ गुँड दुइतिर*
*मेरो आँसु झर्दछ बरबर*
*के खायो के लायो होला*
*मेरो माया बनको चरीले*
*केही नहोस् त्यो मेरो मायालाई*
*दुःख जत्ति हे दैव फूल झै होस् ।*

उसको यस्ता विरही कुरा सुनेर नजीक बसेकी एक अधबैसे नारी उसलाई यसरी सझाउँदछे ।

*हातमा बाला घाँटीमा सिकरी*
*आउला माया नमान फिकरी ।*

अझ आँसु झार्दै भक्कानो पारेर रुँदै यसो भन्दछे ।

*हिमालचुली त्यो पारिबाट हिउँ पर्न छाड्दैन*
*बगेको खोला उडेको चित्त थामेर थामिन्न*
*बिर्सु माया बिर्सन सकिनँ*
*संझु माया म कति रोइरहने ?*

जहानिया शासनबाट पिसिएका नेपालीमा एकै देशका मानिसमा पनि भेदभाव र घृणा उत्पन्न हुने खालका भावनाले जरो हाली तँ मदिसे तँ पहाडी भन्ने तुवाँले विचारले नेपाली-लाई ढाकेको थियो। जहानिया शासनको अन्त भएर देशमा पञ्चायती प्रजातन्त्र आएपछि मेचीदेखिका नेपाली वास्तवमा एक भएका छन् ? जसको फलस्वरूप तराईबाट गर्मी छल्न गएकी एक युवती रोदीमा जाँदा आफ्नो मनको भावना यसरी

पोख्दछे। ऊ भन्दछे-मेरो स्वामी मलाई छाडेर किन बैरागी भयो। यो महोत्तरीकी युवतीले तराई गीतको मेलो यसरी सारिहोली।

*हो रामा काहे लागी सैया भेले जोगीया*
*सुतल छलहुँ पीयासँग सेजिया*
*सेजिया से पीया भेले जोगीया हो रामा*
*जहुँम जनित हुँ पीयाचल जय ताहँ*
*बन्दी तहुँ भे रेशमके डोरिया हो रामा*
*यी हम जन्ती हुँ पीया निरमोहिया*
*घडीत हुँ भे जोगिनीके भेष हो रामा*

यसरी रामदीन रावतकी स्वास्नीले गाएको सुनेर भैरहवा तौलीहवातिरका एक बथान युवती यसरी गाउँदछन्।

*भोर भैले हे पीया मीन साख भैले है*
*उठन पलंगीयासे काइलीया बाल है*
*हम उठबे करवै गेधनी हम उठदे करबेगे*
*देइना मेरे ठवा हम कलकता जैबोगे*

यसरो सबले आफआफ्नो ढगको भाकाको गीत गाएको सुनेर मनकामना जाँदा रोदी बसेको काठमाडौंको भीनद्यो कान्छा फागुको वेलामा गाउने गीत गाउँदछ।

*ध्यॉ दंक बजी तय् हेखें निगः काला तय*
*जिचा भाजु बैबले खापां का का छूव।*

यसरी भीन्द्योले फागुको गीत गाएपछि हीरामैचा र बॉगचा यसरी गाउँदछन् ।

*हीरा मैचा—दालचीनी पाता नैक्या होखा*
*सिलेवरया चिलंचो दाइ*
*वहे बजां मतोन धाःसा*
*जन्मजन्म गाइगु यो दाइ माया मदुला ।*

*बागचा—म्हिग बहनी हुबुया ल्यासे तता फफसोल*
*क्वन्हु वया खापा मचा निन्हु वया न्ह्यलंमचा*
*अपायसक सता हंहे मधा माया मदुला ।*

असल पातो नरिवलको हुक्का सिलेवरको चिलिम भएको तमाखु खाएनौभने बोलचाल बन्द भन्दै हीरामैचाले भनेपछि बागचाले आएँ फर्केर गएँ हेरिनौ, कहिले ढोका बन्द थियो बोलाएँ सुनिनौ, केको माया मार्ने भनेर जबाफ दियो । यसरी नै रोदीमा नेपाली भावुक हृदयको वेदना फल्दछ, फुल्दछ र मौलाउँदछ ।

## (ग) कर्खा वीररसको गीत

हामी नेपाली हौ, हाम्रो देश नेपाल हो । यो देशको हृदय धरती जस्तै बिशाल र हिमाल जस्तै गम्भीर छ । हिमालयबाट झरेका नदीले फस्टाएको यो देशको पवित्रता यिनै नदीले बोकेर बगेका छन् । वास्तवमा यो देशमा जन्मेका महान् आत्माको

मायालु प्रकाशले विश्वको कुनाकुनामा अमिट छाप लगाएका छन् । कालसग सिगौरी खेली देशको लागि प्राणको बाजी थाप्ने नेपालीहरुको वीरताले मानिसलाई जीउँदो भएर बाँच्न सिकाउँछ, हुन पनि यो मञ्जुश्रीले डाँडा फोरी बस्ती बसाएको देश हो, यो नेमुनिको देश हो । किरात, सेन, लिच्छवी, मल्ल राजाले पौरख देखाएको देश, शाहवशी राजाले विशाल बनाएको देश हो । शिव र बुद्धको देश, सीता र भृकुटीको देश, कपिल मुनिको देश, अरनिको र एकलव्यको देश यो वाल्मीकिको देश, यो वेदव्यास-को देश, यो अमरसिह र भक्ति थापाको देश, यो बलभद्र र चामु मगरको देश, यो नथुनी र बिल्दु मडारको देश, यो देवकोटा र मोतीरामको देश, यो गजे घलेले तीर हान्न सिकेको देश, यो रारा दह र फेवा ताल भएको देश, यो चमरी गाई र कस्तूरी मृगको देश, यो मुनाल र डाँफेको देश, यो मुजूर रानीचरीको देश, यो कोशी काली कर्णाली र वाग्मतीको पवित्र जलले सिचेको देश, यो मेरा असंख्य बीर पुरुखाले रगत पसीना झारी हरियाली डाकेको देश, यो अन्नपूर्ण र मकालुले सगर ताकेको देश, यो बादलभन्दा माथि हिमालय उठेको देश, यो मेचीदेखि महाकालीका नेपालीको देश हो । यिनै वीरहरू र बहादुरीमा विश्वविख्यात नेपालीको अमर गाथा गाउने गाइनेको कर्खा लोकगीतको पनि नेपाली लोकगीतमा ठूलो स्थान छ । कर्खाको गीत केवल गाउने पेशा भएका गाइने जातिले सारगीको धूनमा गाउँघर घुमेर चौतारीमा बसेर गाउँछन् । कर्खा लोक-

गीतमा नेपाली शूरवीर युवकहरूको बहादुरी जोश र हिम्मतको बयान बढता पाइन्छ ।

*लाहुरे दाइको फेशनै राम्रो*
*रातो रुमाल खुकुरी भिरेको*
*भागी मरे गिद्धले खाने*
*लडी मरे जीउँदै स्वर्गमा*
*लाहुरे भै खुकुरी भिरेर*
*केको डर बैरीलाई देखेर*
*मर्दैन नेपाली छोरा*
*चिसो पानी खाएर हुर्केको*
*हट्दैन नेपाली छोरा*
*धावैमा बैरिलाई देखेर ।*
*गोर्खाली भाइ भजनू कालीको नाम*
*सरकारको निमक खाई सोझो गर्नु काम*
*बैरिसंग नझुक्नुहोला*
*स्वर्गबाट सराप्लान् पुर्खाले*
*खोला खोला नहिंड्नुहोला*
*दुश्मनले चिनेर हिर्काउला ।*

यस्तै तल दिइएको कर्खागीत बलभद्र कुँवरसग सम्बन्धित छ ।

*चक्र बाहुँ बीर बाहुँ धीर सूर वीर*
*धन्य वीर बलभद्र कुँवर ।*

मन्तरी भै पौरख देखायो
धन्य तिम्रो काम
राख्यौ ठूलो मान
फिरंगीको वैरो चल्यो
गोली चल्यो बरबर
हुकुम दियौ फौजलाई
लड्न अघि सर
बैरि काम्यो थरथर
मन्तरी बलभद्र कुँवर।
फिरंगीलाई निहुराया
जुहारत खजाना सुन द्रव्य चाँदी
हीरा हार मोती पन्ना मानिक
बाजा त तुरुग
जग्गा पति सबै छत्तिस जात
एक भई भई हूल बाँधी
फिरंगीको सातो खाया
धन्य हो धन्य
मन्तरी बलभद्र कुँवर।
बलभद्र कुँवरका मन्त्री भारादार
थापा, पाडे, बस्नेत, मगर
भिम्सेन नैनसिह रामसिंह राना
चामु गुरुंग रणबम, भीमवर पाँड़े

गंगाधर शशिधर देवीदल थापा
बहादुर सिपाइहरू
तुरुंगीको बाजा
बलभद्र कुँवर ।
ढाल फटफटाए फेरी घूरौ बादी आग
फिरंगी र गोर्खालीको पऱ्यो घमसान
बुद्धिबल कप्तान लड्यो जोधानि
हाकाहाकी प्राण दिने शेरमानसिंह
यसपालि पऱ्यो ठूलै घमासान नि
बैरि पनि धेरै नि
रणभूमि हेर्न गए बलभद्र आफै,
जामा खोली फेटा झिकी पुछ्न लागे रगत
धन्य वीर भन्दै उन्ले टाउको उठाए
हिक्का छोडी बुद्धिबल स्वर्गतिर लागे
आँसु काढी बलभद्र पछ्यौरी ओढाया
धन्य बलभद्र कुँवर ।
हल्ला चल्यो बुद्धिबल बिते भनी
रुन थालिन् डाँको छोडी कान्छी कपतान्नी
दलभञ्जन, शेरजंग सम्झाउन थाले
कप्तान आउलान् भन्ने ठूलो थियो आशा
मूर्छा परी कप्तान्नी खलंगाको माझ
गुलाफजल सिरीखण्ड

तुलसीको जल
माथा छर्किन थालिन्
कर्णेल्नी मानसिंह
आँखा खोली पुलुक्क
स्वामी भनी बोलिन्
हातका चुरा फोरी
टीकाटाला पुछिन्
अन्न माल धन माल
हीरा हार मोती
छुट्यो खसम सिरैको सिन्दूर
कातानको चीना देख्दा रुन्छन् दौंतरी
धन्य जोधा राना बुद्धिबल नि !
मरदकी पत्नी भई
किन रुनुपर्दथ्यो
उठिन् झट्ट देवीसरी
फिजी झाँक्रो बोल्न लागिन्
कान्छी कप्तान्नी
फिरंगीको सातो लेऊ
मेरो धीर वीर पारे
बैरि मास गोर्खालीको शिर
मरे पनि स्वर्ग पुगे मेरो बुद्धिबल
बाँकी छन् अझै यहां उनका दलबल

रणमा भाग्योभने होला
माथि खलबल
अघि सर अब बैरि मार्न मेरा दलबल
धन्य होऊ बलभद्र कुँवर ।
यति भनी कप्तान्नी सती गइन् हामी
गोर्खालीको बहादुरी फिरगीले जान्यो
गोला तोप बारूद छाडीकन भाग्यो
असोज महीनाका दिन चौध जाँदा
अधमपुरमा लडाइँ पर्‍यो घमसान
पक्रिएका बैरिलाई तोपले उडायो
वडा बडा वीर योद्धा पीठ फर्कायो
गोरखाली वीरहरू जय काली भन्थे
काली भन्दा फिरगी त सातो गई कुद्थे
खेली खेलावट भीममान तहाँ थिया
त्यस्ता त्यस्ता बहुत लड्न आया
गोर्खालीको फेला पर्‍यो अब कहाँ जाउला
खेलावटको देखाउँला तमाशा
धन्य मन्तरी बलभद्र कुँवर ।
हल्ला दियो पल्टनले
झिक्यो खुकुरी
फिरंगीको माझ पसी उधुम मच्चाए
रगतको नदी बगाए नि

*बलभद्र कुँवर नि !*
*चारै पल्टन भयो अनि झ्याप*
*लौं भाइहो रहन फेरि काट*
*जमामर्दी छ पल्टनले देखाएको किम्मत*
*यस्तै गरी बैरि मार नहारे हिम्मत*
*कान्तिपुरमा लेखिनेछ तिम्रो हाम्रो नाम*
*स्वयम् मन्त्री बलभद्र तंसिएर आए*
*फिरंगीको फौजको हेर सातो खाए*
*धन्य बलभद्र कुँवर ।*

यस्तै मदन कीर्तिशाहले नेपाल ( काठमाडौ ) हान्दाको कर्खा यस प्रकारको छ

*महाराजका भीम भाइ*
*चौतरिया मदनकीर्ति शाह*
*पहिला नुवाकोट बेलकोट मारे*
*ककनी आई स.ध लगाए*
*नुवाकोटदेखि चल्यो फौज*
*पुग्यो बेलासपुर*
*थानसिंङ कपिलास*
*पच्छे धातु दर्जा कने*
*सिन्धु धक्कालाई*
*दल दर्गा साई*

पूर्व सिन्दु नाल्दुँगमा नै
मदनकीर्ति शाह
झिल्टुँग डड्वा दहचोक
चन्द्रागिरि सर गर्न
पुगे मदनकीर्ति शाह
थाना तिष्टुँग पालुँग
फरपिगको मारा
जेठा चौतरिया
बुढनचोली जाइ ठाना देउन
सात गाउँ लुटी ल्याउ
जेठा चौतरिया
वुँगमती खोकना
सानागाउँ मारी
सहरलाई धक्का देउन
मदनकीर्ति शाह
जेठा चौतरिया
पाटनमा मारे तीन सहर
चौतरिया मदनकीर्ति शाह
सिउपुरी बारौ भन्छन्
गढीको हान्नलाइ
टोखा धरमथली लुटी ल्याई
भाग्न लागे तीन सहर

*जयप्रकाश मल्लका सिपाइ*
*धन्य रे धन्य मदनकीर्ति शाह*
*नेपाल हान्ने चाँजो गर्नु*
*कीर्तिपुर सिमक्षेत्र बार्नु*
*साँखु चाँगु दुवै मारी*
*डुँगरुँग थाना जानु*
*डुँगरुँग मारी ठिमि आउला*
*तीन सहर प्रदेश गर्नु*
*भादगाउँका रणजितलाई*
*डोली चढाई ल्याउनु*
*शिवमण्डल फलाञ्चोक*
*ठाना पर्‍यो भमरकोट*
*महादेव पोखरी बलियो गर*
*आउला रानीकोट*
*बारतिमाल हात ली छुट्याएको देश*
*चमुडा कस्तूरी बाजे तुरुँगा*
*लिष्टि लिष्टि पार्दै भनेछ*
*धन्य है मदनकीर्ति शाह ।*

## (घ) नेपाली लोक गीत र प्रकृति चित्रण

प्रकृति पूजारी सगीतप्रेमी नेपालीको हृदय स्वच्छ तथा हिमालको छहरा जस्तै निर्मल छ। नेपाली जनहृदय वसन्तमा

हरियो मुना लाग्दा, बादलमा सात रँगे इन्द्रेनी पर्दा, हिमालको सेतो टह्कमा बिहानको घाम लाग्दा, हिमालबाट अविरल गतिमा झरेका खोलाको कलकलनाद सुन्दा, आकाशमा सिढी परी भेडाभुत्ले बादल सिगौरी खेल्दा, पहाडका गरामा लहलहाउँदा जुनेलो, कोदो, फापर झुल्दा, ब्याँसीमा पहेला धानका बाला बहेली खेल्दा यसमै लीन भएर कसरी आफ्नो हृदय फुटाउँदछन् । भेडाभुत्ले बादलसँग सिगौरी खेल्दा, सगर ताक्ने हिमालयको सेतो चाँदीकल्पे चुचुरोमा नपाकेको सुन्तले घामले धुँदा, अनि हिमालमा चिप्लेटी खेलेर हरियो धूपीका कापबाट छिरी आमाका साथ गुँडुल्किएर लुटपुटिएको कस्तूरीलाई झस्काएर ब्याँसीमा खसेका सूर्यका तेस्रो किरण आँगनका आँखीझ्यालबाट छिरेपछि हिजो रोदी घरमा देउडा खेलेर अबेर सुतेको लेकाली कान्छोले बिहानको सुन्दर दृश्यमा रमाएर सिरानीको मादल ठटाउँदै यो गीत गाएको थियो कि ?

*सुन्दरज्यू [illegible]ानी हिमाल झल्कियो झलझल*
*ब्याउलीको सिन्दूर जस्तो*
*सुन्दरज्यू तर्पाए डाँडो लौ हेर लौ हेर*
*स्वर्गको सिढी जस्तो*
*सुन्दरज्यू बिहान हिमाल झल्कियो*
*झलझल कान्छीको पोते जस्तो*
*सुन्दरज्यू पारिका पाखो लौ हेर लौ हेर*
*पाकेको बयर जस्तो*

सुन्दरज्यू बिहानी हिमाल झल्कियो झलझल
लौ हेर कति राम्रो
सुन्दरज्यू फेदीमा हाम्रो घरबार घर झन्
हेर कति राम्रो

अनि लेकाली साहिलोले चाहि आफ्नो भावना यसरी पोखेको थियो होला—

घामको बुकुवा घसेर
हाँस्यो हिमाल सुन्तले रँगमा
कति राम्रा तर्पाए गरा
थुम्के डाँडा बादल लेकमा
नागबेले सुनका खेत
शरीरदेखि खोलाको तीरसम्म

यस्तै गरी अन्तरेले पनि आफ्नो मनको भाव यसरी पोखेको थियो—

वारि पारि नीलो डाँडा
हिउँको हिमाल सेतो
नथाकेर झर्छ सधैं
दूधफिंजे झागो
हाम्रो घर, सगरको छेउ
ढुँगे पहाड, खोपेर चिनेको ।

हिमालको मनमोहक दृश्यमा रमेको च्याँगबा यो देशमा

जन्मन पाएकोमा गर्व गर्दछ अनि मरेपछि पनि फेरि एकपल्ट यही देशमा जन्मन ईश्वरसग प्रार्थना गर्दछ ।

*हिमालयको छ चिसो पानी*
*जति खायो झन् बढ्ने जवानी*
*हिउँको चुच्चो सेताको सेतै*
*रातमा मइन झैं बल्दछ*
*हरियो धूपीको रूख*
*सधैं भने हरियो पर्दछ*
*भाग्य नभै जन्मन्न कोही*
*माया फुल्ने सुन्दर देशमा*
*मरे पनि जन्माइद्यौ शंकर*
*हिउँचुलीको सियॉल ताप्छु म*
*मरे पनि जन्माइद्यौ शंकर*
*डाँफेको नौरंग छाप्छु म*
*मरे……*
*कस्तूरीको सुगन्ध टिप्छु म ।*

पूर्व आठराईको एक युवक लेकमा वास बसेको रात सधैं बादलले ढाक्ने लेकमा राती जून लाग्दा र बिहान घाम लाग्दा यसो भन्छ—

*अर लुंबे फूदा दाक्या सेसंग*
*उनेमा स्यासङ अरलूबे फूला*

यसरी नेपाली गाउँघरे दाजुभाइ आफ्नो हृदयमा झट्ट

जस्तो प्रभाव पर्दछ त्यसलाई गेडामा उनेर भाकाले सिगारी आफ्नो भावना पोख्ने हुनाले नेपाली लोकगीतमा आसपासको प्रकृतिको चित्रण पनि प्रशस्त मात्रामा देखा पर्दछ ।

## ( ङ ) ऋतुकालीन लोकगीत

नेपाली लोकगीत अविरल कुलकुलाउने खोलानाला जस्ता छन्, पहाडको छाती फोरी धरतीमा हरियाली ढाक्न निरन्तर झगझग गर्दै झर्ने दूधफिजे छागो जस्तो छ । यो सागर जस्तै गम्भीर, हिमाल जस्तै उच्च, हिमालका फेदीमा लाम्चिएर आकाश ताक्ने धूपी जस्तै सधै हरिया र कस्तूरीको बिना जस्तै सुगन्धित हुन्छ । प्रकृतिको सौन्दर्यले परिपूर्ण भएको र मन्दिरै मन्दिरले भरिएको यस देशका विभिन्न धर्म र जातका मानिसहरूले वेला-वेलामा चाडपर्वमा आफ्नो वेशभूषा र भाकाको प्रदर्शनी गरी आ-आफ्नो सस्कृतिलाई जीवित राखेका छन् । जन्मँदाखेरि, मर्दाखेरि, विवाह हुदाखेरि, धान रोप्दाखेरि, धान काट्दाखेरि गीत गाउँदछन् नाच्दछन् । यस प्रकार समय-समयमा र ऋृतु-ऋतुमा पनि बेग्ला बेग्लै गीत गाउँदछन् । जस्तो नेपालीहरूको सबभन्दा ठूलो चाड दशै र तिहारमा गाउने र नाच्ने मारूनी, र सोरठी, भैलो, र देउसी, धान काटेपछि गाउने दाई गीत, धान रोप्दा गाउने जुहारी, देउडा, दोहोरी, बिहामा गाउने खाँडो र रत्योली, बाला चतुर्दशीमा गाउने भजन र मालनी, गोसाईथान जाँदा गाउने सिलुमे, फागुनको

फागु गीत, चण्डी पूर्णेको मुदुम र च्याङ्ग, जात्रामात्रा र मेला-पर्वमा गाउने ख्याली मादले र चुटके र इष्टमित्रको सगको वियोगमा गाउने फाग इत्यादि सामूहिक गीतहरूले वेला-वेलामा नेपाली घर आँगनमा पुगेर सबैलाई जुरमुन्याई रमाउन लगाउँदछन् ।

## दशैं र तिहारमा गाइने गीत . देउसी, भैलो, मारनी, सोरठी

दीपावलीको तेस्रो रातमा गाउँघरका युवक बालक, बूढाहरू मिलेर वर्षौं देखिको आपसी रीसरागलाई भुलेर सबैको सुख र समृद्धिको लागि ईश्वरसग प्रार्थना गर्दै आफ्नो हृदयको आन्त-रिक शुभकामना व्यक्त गर्न सबैको घर आँगनमा गएर देउसी गीत गाउँदछन् । देउसी गीत गाउँदा आफ्ना आफ्ना गाउँका युवक ठिटाहरू मिलेर गाउँको बूढोपाकोको नेतृत्वमा मादल बजाउँदै गाउँदछन् । गाउँको बूढाले पहिलो चरन भट्याउँछ, त्यसपछि सबैले बूढाको भाका छोपेर सबै एक स्वरमा मादलको तालमा देउसीरे भन्दै गीत गाउँदछन् । वास्तवमा तिहारतिर सबैको घरमा सेल पाक्दछ । यसलाई सेलको चाड भने पनि हुन्छ । जुन घरमा देउसी रे जान्छन् त्यहाँबाट उनीहरूले सगुन भनेर सेल मिठाई आदि पाउँदछन् । यसैले उनीहरू देउ सेल रे भनेर माग्दा होलान तर शब्दको अपभ्रंश भएर देउसी रे भएको हुनुपर्दछ । यो देउसी गीत यस प्रकार छ. ।

ए भन भन भाइहो – देउसी रे
वर्ष दिनको – देउसी रे
चाहाड ठूलो – देउसी रे
बाँचेको हुँदा – देउसी रे
पाएको मान्न – देउसी रे
रीस र राग – देउसी रे
छाडिदेउ सब – देउसी रे
गाईवस्तु बढ्नु – देउसी रे
माटोसरि द्रव्य – देउसी रे
घरभरि अन्न – देउसी रे
भरिपूर्ण होओस् – देउसी रे
नपरोस् दुःख – देउसी रे
नपरोस् पीर – देउसी रे
शंकरले रक्षा – देउसी रे
दिन दिन गरून – देउसी रे
सेल र रोटी – देउसी रे
रुपियां पैसा – देउसी रे
जो दिनुपर्नें – देउसी रे
घर घर जानु – देउसी रे
हामीलाई पर्छ – देउसी रे
झिलिमिली झिल्का – देउसी रे
सेल रोटी मिल्का – देउसी रे

ए पख पख भाइहो – देउसी रे
ए भ्यालबाट हेरे – देउसी रे
ए दिनै लागे – देउसी रे
ए थाप थाप बाबु – देउसी रे
ए भन भन भाइहो – देउसी रे
गाईवस्तु बढुन् – देउसी रे
नलागोस् रोग – देउसी रे
भलो वस्तु कपडा – देउसी रे
भित्रियून् घरमा – देउसी रे
अन्नपात बढोस् – देउसी रे
हीरा र मोती – देउसी रे
रुपियां पैसा – देउसी रे
जै जुहारात – देउसी रे
सून र चांदी – देउसी रे
तामो र पित्तल – देउसी रे
माटोसरी वैरून् – देउसी रे
ए भन भन भाइहो – देउसी रे
ए भन भन भाइहो – देउसी रे

यस्तै भैलो गीत यस प्रकार छ.

हे औंसी वारो
गाई तिहारो, भैलो

· हरियो गोबरले
लिपेको
लक्ष्मीपूजा गरेको
हे औंसी बारो
गाई तिहारो मेलो
अगेनी आइन् आँगन
गुने चोलो मागन
हे औसी बारो
गाई तिहारो, भैलो
हामी यसै आएनौ
बलि राजाले पठाएको
हे औसी बारो गाई तिहारो, भैलो
जसले दिन्छ मानो
उसको सुनको छानो
जसले दिन्छ मुरी
उसको सुनको धुरी
जसले दिन्छ पाथी
उसको सुनको छाती
हे औसी बारो
गाई तिहारो, भैलो
घर घर बत्ती बालेर
मनको मैलो फालेर

*इष्टमित्र डाके है*
*सेल र रोटी पाके है*
*हे औसी बारो*
*गाई तिहारो, भैलो*

यस्तै मारूनी नेपालको ज्यादै पुरानो र ख्यातिप्राप्त नृत्य र गीत हो। यो गीत नेपालीको ठूलो चाड दशैंमा निकालिन्छ। यसमा आइमाई र लोग्नेमान्छे नाच्दछन्। खुद छोरीमान्छे र छोरामान्छे नाच्दा मारूनी र केटालाई केटी बनाएर नचाउँदा पुरसुगे मारूनी भन्दछन्। मारूनीको अघिपछि लागेर नाच्नेलाई ढटुवारे भन्छन्। यसमा वरिपरि १६।१७ जवान गीदागीहरू मादल बजाएर गीत भन्दछन्। त्यै गीत र मादलको तालमा नृत्य शुरू हुन्छ। यो गीत र नृत्य झण्डै रातभर जसो चल्दछ।

*कोशीका किनारैमा कसले पूजालाई,*
*रगतले बालुवा भिजाई।*
*हो, हां राम रसै मुरली,*
*गोकुलमा कृष्णले बजाई॥*
*तामे ढुवकुर बनमा शिकारीको,*
*वाणले लडाई।*
*नरोऊ न नरोऊ हे आमा,*
*कर्मै उस्तो के दोष अरूलाई॥*

नौलाख तारा सगरभरि,
कसले आमा गन्न सक्यो ।
हो हो राम चले बनिवास,
कर्म टार्न कसले सक्यो ॥
कोशीको किनारैमा कसले पूजालाई,
बालुवामा मूरती बनाई ।
हो हो रामै रस मुरली,
गोकुलमा कृष्णले बजाई ॥
अरुणैको डुँगिया,
देउन माझी म ख्याउँछु बहना ।
हो हो राम रसै मुरली,
म ख्याउँछु बहना ॥
तमोरकै गहिरो नदीमा,
देउन माझी म ख्याउँछु बहना ।
हो हो राम रसै मुरली,
म ख्याउँछु बहना ॥
कोशीको किनारैमा कसले पूजालाई,
रगतले बालुवा भिजाई ।
हो हो राम रसै मुरली गोकुलमा,
कृष्णले बजाई ॥
कोशीको किनारैमा कसले पूजालाई,
बालुवाको महल बनाई ।

*हो हो राम रसै मुरली,*
*गोकुलमा कृष्णले बजाई ॥*

दशैंदेखि तिहारसम्म प्रचलनमा ल्याइने प्रमुख गीतमध्ये सोरठी पनि एक हो। यो पनि नृत्यसहितको गीत हो। यसका नृत्य र गीत धुवा दुवै राम्रो हुन्छ। सोह्र प्रकारले नाचिने र गाइने भएकोले यसको नाम सोरठी रहेको हुनुपर्छ। यसको प्रचलन विशेष गरी गुरुग जातिमा पाइन्छ। यो गीत यस प्रकार छ।

*यसै पापी दाजैको आस छैन मलाई*
*चलिजाऊँ माइतीको देश*
*वारीको रायो तुषाराले खायो*
*सानीआमै यो ढिडो केसँग खाऊँ।*
*वालककालमा खसम बितिगयो*
*सानीआमै यो बेराम कसलाई सुनाऊँ।*
*यसै पापी राजैको आस छैन मलाई*
*चलिजाऊँ माइतीको देश।*
*लिन आऊ सगी मेरी फाटिदेऊ बादल*
*म त हेर्छु माइतीको देश।*
*यसै पापी राजैको आस छैन मलाई*
*चलिजाऊँ माइतीको देश।*

## तीजको वेलामा गाइने गीत : सगिनी

तीज अर्थात् ऋषितर्पणीको वेलामा खास गरी जवान युवती माइती आउँदा महादीप बालेर नदीको सुसाइ र हावाको वहाइमा स्वर मिलाई सगिनी गाउने गर्दछन् । यस्तो गीतमा लामो लामो गीत पनि पाइन्छ । यसमा विशेष गरी घरमा आफूले भोग्नुपरेको दुःखको पनि वर्णन र माइतीमा आफ्नो स्नेहपात्रलाई पुकार गर्ने र आफ्नो दु खमा काखी बजाउनेलाई नसुनाउने प्रण गर्दछन् । सगिनीको अर्को अर्थ छ—आफूसग मिल्ने आफ्नो साथी र उसग आफूले पाएको दु ख र सुख पोखी मनको बह सुनाई मानसिक शान्ति लिने । सगिनीको केही नमूना तल दिइएका छन् ·

( एक )

*सालको पात खाइरहेछु रूखको बोक्रा लाइरहेछु ।*
*दुःख लुकाइद्यौ चरी ! सुख बुझाइद्यौ ।*
*बाबै हाम्रा सुने त झट्टै भरिया पठाउलान्*
*आमै हाम्री सुने ता कोसेली बनाइ पठाउलिन्*
*भाउजु हाम्री सुने ता कोखेलो बजाउलिन्*
*सालको पात खाइरहेछु रूखको बोक्रा लाइरहेछु*
*दुःख लुकाइद्यौ चरी सुख बुझाइद्यौ ।*
*मामा हाम्रा सुने त झट्टै लिन आउलान्*
*माइजु हाम्री सुने त कोसेली बनाइ पठाउलिन्*

बुहारी हाम्री सुने ता कोखेलो बजाउलिन्
सालको पात खाइरहेछु रूखको बोका लाइरहेछु ।
भाइ हाम्रा सुने ता रुपियाँ पैसा पठाउलान्
दाइहाम्रा सुने ता लुगा फाटो पठाउलान्
भदा हाम्रा सुने ता मीठो चोखो लेराउलान्
काका हाम्रा सुने ता अन्नपात पठाउलान्
माइजु हाम्री सुने ता आँखामा आँसु रसाउलिन्
बहिनी हाम्री सुने ता थपडी बजाई पठाउली
दिदी हाम्री सुने ता खाइथिस् भनी पठाउली
सालको पात खाइरहेछु रूखको बोका लाइरहेछु
दुःख लुकाइद्यौ चरी सुख बुझाइद्यौ ।

( दुइ )

नरोऊ नरोऊ सान्नानी ती पनि तिम्रै माइती हुन्
हिमालचुली पल्लापट्टि झर्‍यो चिसो पानी
खैजडीमा पैसा बज्यो टिपी लैजाऊ नानी
सान्नानी जाँदो म आउँदो नौतुनामा भेट हुँदो
पाटनको ठूलो साहू सौतेनीको माइतीनी है
सौतीले ल्याउँछे सोली या डोली हामीलाइ वचन है
कि ल्याऊ बाबा सोली या डोली
कि ल्याऊ बाबा छुरिया है
सान्नानी जाँदो म आउँदो
नौतुनामा भेट हुँदो

छुरिया हामी दिदैनौ चेली
लैजान चेली डोलीया नै
सान्नानी आउँदो म जाँदो
नौतुनामा भेट हुँदो ।
नरोऊ नरोऊ सान्नानी
ती पनि तिम्रै माइती हुन् ।
शिरमा लाउने शिरफूल
बहिनी मेरी कान्छीलाई
कानैमा लाउने कुण्डलु
बहिनी मेरी कान्छीलाई
नैनसूतको फेटा बैनीज्वाईँलाई
नरोऊ नरोऊ सान्नानी दिउँला तिमीलाई
नरोऊ नरोऊ सान्नानी
ती पनि तिम्रै माइती हुन् ।
हिमालचुली पल्लापट्टि
झर्‍यो चिसो पानी
खैंजडीमा पैसा बज्यो
टिपी लैजाऊ नानी ।
नाकैमा लाउने फूली
बहिनी मेरी कान्छीलाई
साटनको चोलो दिउँला
बहिनी मेरी कान्छीलाई

घॉटीमा लाउने नौगेडे माला
बहिनी मेरी कान्छीलाई
नरोऊ नरोऊ सान्नानी
ती पनि तिम्रै माइती हुन् ।
हिमालचुली पल्लापट्टि
झर्‍यो चिसो पानी
खैजडीमा पैसा बज्यो
टिपी लैजाऊ नानी ।

( तीन )

एक बीस पॉचका हरिमल्ल राजै
चार पुगी पॉचकी म वल्ली रानी
यी दुइको बिबाह भयो
न आमै मैले नि हातमा लिउँ
न आमै मैले काखैमा लिउँ
माइती देश पठाइदेउ हे मेरी आमै
न माइती यसका न छ हे मावली
यो गर्भै टुहुरी हरिमल्ल राजै
कहॉ जा भनिद्यॅू
बार हेर बीस नि भरिया लैजाउ
हीरा र मोती सुन चॉदी लैजाउ
भलो वस्तु कपडा अन्नपात लैजाउ

गाई र भैसी वस्तुभाउ लैजाउ
बारेर वर्ष पढेर बस
पोस्तोक बॉच्ने पण्डित बन
घर फर्क हरिमल्ल राजै
बैसको बोझले नुहेकी होलिन्
स्वामीको पाउ समाउने होलिन्
वरिष १७ की भवमल्ली रानी
त्यहॉदेखि हिंडेका बाले
बाटामा भेटे दहीको भार
के साइत पऱ्यो नि
रहु नि रहुँ हे मेरा संगी
परदेश जान्छु नि
बाटामा भेटें भरेको घैलो
के साइत पऱ्यो नि
रहु न रहु परदेशी दिदै
म पानी अचाउँछु ।
त्यहारदेखि हिंडेका राजै
गोस्वामी कुटी पुगे नि
साधु र सन्तको धुनीमा पुगे नि
घर छोडी आएँ म नि
यै भेष धर्छु यैं बसी पढ्छु
घरैमा होलान् बा महतारी

रुँदिहुन् संझी हितकी रानी
नढाँट हाम्लाइ हरिमल्ल राजै
यो भेष त हुँदैन
घरमा छैन बा महतारी
न छन् मेरा हितकी रानी
यै भेषमा बस्छु यै भेषमा पढ्छु,
ए साधु बाबा म पण्डित बन्नेछु ।

बाह्र वर्षपछि हरिमल्ल आफ्नो पढाइ सकेपछि कुटीका गोस्वामीलाई पहिले आफूले ढाँटेका कुरा सत्य बताई घर जाने तरखर गर्दछन् ।

आज र मैले के देखे सपना
भनुँ कि नभनूँ !
सुन र सुन हे साधु बाबा
भनुँ कि नभनूँ !
के देख्यौ सपना हरिमल्ल राजै
न छली भने है
जो देख्यौ राजै त्यो सबै बताऊ
पूर्ण है होला कानचिरे जोगीलाई ।
घरैमा रेछिन् महतारी मेरी
हितकी रैछिन् भवमल्ली रानी
सपना यै देखें ।

दुइ बीस चार भरिया लैजाऊ
रत्नैको लागि बिगुत लैजाऊ
बाघको छाला बिछाउनी लैजाऊ
मृगको छाला पछ्यौरी लैजाऊ
बनको फल सामल लैजाऊ
झोली र तुम्बा भिरेर लैजाऊ
हातमा लौरी टेकेर लैजाऊ
घरैमा फर्क हरिमल्ल राजै
कानचिरे भेषैमा
आशीर्वाद लैजाऊ हरिमल्ल राजै
कानचिरे भेषैमा ।
गहमा आँसु
जोर पाउ लागे हरिमल्ल राजै
गोस्वामीको पाउमा
त्यहाँको देखि हिडेका बाले
पुगे है ब्यांसीमा
जेठको रोपाइँ
कसको हलो कसको रोपार
के चासो पर्‍यो कानचिरे जोगीलाई ।
नौमति बाजै अघिपछि लगाई
चेली सुसारे पछिपछि लगाई
बाँकी रोपारेलाई दोपहरै बाँड्न

भवमल्ली रानी दोपहरे बाँड्दैछन्
आलीको छेउका हरिमल्ल राजे
हँदैछन् रमिता ।
रानीले देखिन् श्यामसुन्दर योगी
कानचिरे जोगीलाई
सुन रे सुन ए साधु बाबा
लौ थाप दोपहरै ।
क्यै पनि छैन हे मेरी रानी
द्यौ तिम्रै पछ्यौरी
डरलाग्दो फुस्रो कानचिरे जोगी
कसरी दिनु पछ्यौरी मेरो नि !
दोपहरे बाँडी फर्किन् नि रानी
रोपाइँ सकेर
सगसंगै लागे कानचिरे जोगी
रानीको घरतिर
बिछोड हुँदा पोँचकि थिइन् भवमल्ली रानी
कसरी जानुन् पोँचकी बाला
हरिमल्ल भनेर ।
घरैमा पुगिन् साँझनी पख
डोलेले बिसाए
महलमा गइन् भवमल्ली रानी
आगनको छेउमा गै बसे कानचिरे जोगी

बास देउ भनेर ।
कानचिरे जोगीलाई के चाहियो बास
जुन बाटो आयौ त्यै बाटो जाऊ दिन्नौं हामी बास
उठ रे जोगी फटकार छाला
जहाँ भए पनि एक पेट खाला
मरिद छैनन् यो घरमा हामी दिन्नौं हे बस्न बास ।
साँझको पाहुना नभन त्यसो
एक रात बस्न देऊ मेरी रानी सिकुवा बास
खत तिम्लाइ पर्दैन ।
आँगनको छेउ नपाउने फुस्रो
सिकुवा ताक्दै छ ।
भित्रको तिम्रो मूल ओछ्यान देउ त मलाई
कोरी र बाटी गरेर फापर पकाइदेउ मलाई ।
लौन नि लौन ओर्लन ओर्ल हे मेरी बज्यै
डरलाग्दो फुस्रो कानचिरे जोगी
मूल ओछ्यान ताक्दै छ ।
त्यहाँ र देखि ओर्लिन् नि आमा
निहाली हेरिन् कानचिरे साधुलाई
मुसुक्क हाँसे हरिमल्ल राजै आमैलाइ देखेर
आमैले पनि लौ चिनिहालिन् हरिमल्ल भनेर
हत्त र पत्त अङ्कमाल गरिन्
सुम सुमि सुस्थाइन्

गह्का आँसु तपतप खसे
अचम्म भइगो
टाउको र गालै मुसारी हेरिन् हरिमल्ल राजैको ।
सुनमा सुन हे मेरी बधू
तिम्रा खसम हरिमल्ल राजै
लौ झट्ट ल्याउ सुनको झारी सुकिलो पारी
पाउ र धोई जल तिमी आउन
कानचिरे जोगी डरलाग्दो फुस्रो
कसरी चिनुँ म
चार पुगी पाँचकी थिएँ र आमै
खसम जाँदा म
खसम आफै हे मेरी आमै
कसरी जानुँ म !

## दाइँ गर्दा गाइने गीत· दाइँ गीत

मगसीरमा धान काटेपछि दाइँ गर्दा गाउने गीत भएकोले यो दाइँ गीतको नामले प्रख्यात छ। यो दाइँ गीत मेचीदेखि महाकालीसम्म प्रख्यात छ। धान काटेर पहिलो झमट चुटेपछि बाँकी रहेको धान र परालको कुन्यू लगाएको हुन्छ। पछि केही दिनपछि यसलाई गोरुद्वारा कुल्चाएर धान झार्दछन्। गोरुको रिंगाइमा एक स्वर बाँधेर दयारेहरू यो गीत गाउँदछन्

आफ्नो चलनअनुसार दाइँ गर्दा दाइँको थलोमा गाडेको मियो को पूजा र बलि दिएपछि गीतको शुरू हुन्छ ।

*हो, हो, हाम्रो बर्दीलाई बाँध्यौ नि*
*मेरो भैया राजै हो*
*माल दाम्ला फिजारिदिए*
*मेरो भैया मियोको गोरू चर्दों हो ।*
*मियो हल्लाउँछ पालीको गोरू*
*मेरो भैया राजै हो*
*बूढो छ ढ्याँग्रो यसै दलमा*
*राखी पूजा गरौला भोटे च्यांग्रा*
*मियोको टुप्पामा बसी गयो कोइली*
*आजको दर्यारेलाई डढेका चोइली*
*हो, हो, हाम्रो बर्दीलाई बाँध्यौ नि*
*मेरो मैया राजै हो*
*माल दाम्ला फिजारीदिए*
*मेरो मैया मियाको गोरू चर्दों हो*
*हाम्रो बर्दीलाइ फोइदिए*
*मेरो मैया थकाइ त मार्दों हो*
*मियो हल्लाउँछ पालीको गोरू*
*मेरो मैया राजै हो*
*हाम्रो बर्दीलाइ बाँध्यौ नि*
*मेरो मैया राजै हो ।*

## बालाचतुर्दशीमा गाइने गीत . भजन, चुटका या खैंजडी

यो गीत विशेष गरी बालाचतुर्दशीको रात सतब्यू छर्न आएका काँठका मान्छेहरू जाग्राम बस्दा गाउँदछन् । यसको अलावा यो गीत पूजाआजा भएको बखतमा पनि गाउने चलन छ । यो गीत विशेष गरी रामायण, महाभारत, देवीभागवत, कृष्णचरित्र, स्वस्थानी व्रतकथा आदि पौराणिक विषयवस्तुमा आधारित हुन्छ । यो गीतको सृजन पूर्व १ नम्बरबाट भएको हो र यसको श्रेय पतञ्जलि गजुरेललाई दिनुपर्छ भनी कुनै गीतमा यसको उत्पत्तिको बयान गरेको पाइएको छ, तर जे होस्, यस भाकाले लोकगीतको विशालतालाई अँगाल्न पुग्दा ऋतुकालीन गीत भएर समेत प्रचलनमा आएको छ । अरूमा सामूहिक गीतका गेडा जस्तै चाका एउटै भए तापनि यसको गेडा भने गीतै पिच्छे र गाउँपिच्छे नै फरक हुन्छ । यो गीत गाउँदा वरिपरि गीदागी बस्दछन् । बीचमा एउटा भट्याउने खैंजडी बजाएर गीतको धुवा उठाउने गर्दछ । अनि उसले नारायणको थेगो भरेपछि सबै गीदागी एकै स्वरमा नारायणको दुर्रा ठोक्दै गीत गाउँदछन् । खैंजडीको प्रमुखता हुने भएकोले यस गीतले खैंजडी गीतको नामले पनि प्रसिद्धि पाउँदैछ । एउटा खैंजडी यस प्रकार छ :

*बुझेनौ कि भाइ हो जो चाहिने सो, इन्द्रजीतको बाण लागी*
*जब लक्ष्मणजी मूर्छा पर्नुभएथ्यो जो चाहिने सो*

रामजी मान्छे जस्तै विलाप गर्न लाग्नुभयो ।
जो चाहिने सो बुझ्नेनौ के नारायण हरिहर
मूर्छा परे लक्ष्मण भनी रामजी रुनुभो
मयालु हातले हे भाइ भनी गालामा छुनुभो
नारायण हरिहर बुझ्नेनौ रामजीले यसरी विलाप गरेको
सुनेर जो चाहिने सो सारा बानर बिलखबन्दमा परे
बुझ्नेनौ के यस्तो चारैतिर सुग्रीवले नजर फिराए बुझ्नेनौ के
यसमा लायक हनुमानलाई लायक देखी मृतसञ्जीवनी
बूटी ल्याउन खटाए बुझ्नेनौ के नारायण हरिहर ।
हनुमान कुदे रामजीलाई ढोगी बूटीको खोजमा
नचिन्दा बूटी जगलै बोकी ल्याइदिए निमेषमा
हो हो ल्याइदिए निमेषमा नारायण बुझ्नेनौ के
हनुमानले बिन्ध्राचल पहाड बोकी रामको अगाडि राखिदिए
हत्तरपत्त वैद्यराजले बूटी खोजी लक्ष्मणजीलाई दिए
भयो बुझ्नेनौ के नारायण हरिहर ।
मूर्छाबाट लक्ष्मण ब्यूँझे हँसिलो आंखाले
हनुमानलाई स्याबासी दिए सुग्रीवराजले
हो हो सुग्रीवराजले
क्रोधको ठोका वाणमा जोरी हान्न थाल्नुभो
लक्ष्मणजीले इन्द्रजीतलाई मूर्छा पार्नुभयो
हो हो मूर्छा पार्नुभो
नारायण हरिहर ।

खेजड़ी गीतको अर्को नमूना यस प्रकार छः

जब अक्रुरजीले कृष्ण र बलरामलाइ कसको ढोकामा के पु-याएथ्यो बुझ्नेनौ के नारायण ।

*दौडेर गयो कंसको हात्ती हाहाकार भो*
*मुक्कीले हानी कंसको हात्ती कृष्णले मार्नुभो*
*नारायण हरिहर*
*सूँडमा तानी मुडकीले हानी कृष्णले मार्नुभो ।*

जब कृष्णजीले दश हजार क भएको हात्तीलाई बुझ्नेनौ के यसरी मार्नुभएपछि कौसीबाट कसले दुईटा बुझ्नेनौ के

*मोटा काला बलिया दुइटा मल्ल युद्ध भो*
*निमेषभरमा कृष्णजीले प्राणै लिनुभो*
*हो हो प्राणै लिनुभो ।*

जब यस्ता शूरवीर पहलमानलाई कृष्णजीले बुझ्नेनौ के बिरालाले मूसा मारे झैं मार्नुभएथ्यो बुझ्नेनौ के कस आफै श्रीकृष्णलाई मार्छु भनी दौडेर आयो ।

*छातीमा टेकी जोर घुँडा धसी घोक्रो फोर्नुभो*
*श्रीकृष्णजीले कंसलाई मारी द्वारिका पाल्नुभो*
*हो हो द्वारिका पाल्नुभो*
*नारायण, द्वारिका पाल्नुभो ।*

यस्तै बालन गीत पनि बाला चतुर्दशीमा गाइने गीत–मध्येको हो। यो गीत ठूलो एकादशीमा पनि गाइन्छ। यस गीतमा पनि देवदेवीको लीलाको वर्णन गरिएको हुन्छ। बालन गीत मात्रै नभएर नृत्य पनि हुन्छ। ८ पाइले १६ पाइले ३२ पाइले र ६४ पाइले नृत्य गीतको गेडामा पनि फरक हुन्छ। यो गीत यस प्रकार छ।

*हो, हो, तम्रै शरणमा खेलन आयौं,*
*आज्ञा देऊ धरतीमाता।*
*हो, हो, सत्यको कीर्ति गणपति,*
*लम्बोदर विधाता॥*
*हो, हो, तिल भीरमा शमीको रूख,*
*मान्छेको अधम तहाँ।*
*हो, हो, त्यै पापी दैत्यले के मार्ला सबलाई,*
*तँलाई मार्ने गोकुलमा॥*
*हो, हो, तम्रै शरणमा खेलन आयौं,*
*आज्ञा देऊ धरतीमाता।*
*हो, हो, सत्य कीर्ति ब्रह्मा शशिधर,*
*नागपास शिरधर॥*
*हो, हो, कालकूट विष तनतनी खायो,*
*भक्त जनको उद्धार।*
*हो, हो, सत्य कीर्ति ब्रह्मा गणधर*
*व्याघ्र चर्म महादेव॥*

*हो, हो, भक्तजनको लागि प्राण दिन्छन्*
*दिन दिन जोभन भन ।*
*हो, हो, तम्रै शरण खेलन आयौ*
*आज्ञा देऊ धरतीमाता ॥*

## धान रोप्ने वेलामा गाइने गीत असारे या जुहारी

प्राय जम्मै समयमा गाए पनि बढ्ता आषाढमा गाइने गीत भएकोले यसलाई असारे र यस गीतलाई युवक युवती मिली गीतमा जवाफ-सवाल गर्ने हुँदा जुहारी भन्ने चलन छ । आषाढ-को समयमा जब धान रोप्ने काम शुरू हुन्छ तब असारे गीत मौलाएर आउँछ । खेतमा धान रोप्नको लागि व्याडे हिले रोपारहरू हुन्छन् । यसमा रोपारको काम विशेष गरी युवतीले लिएका हुन्छन् । आलीमा बसेर रातिमा हेर्ने युवकहरू बैसको बोझले नुहेकी कान्छी र च्याण्टीसग गीत गाएर कुरा गर्दछन् । असारे गीतको मूल फुटेपछि करीब ७ दिनसम्म पनि नथामिएर चल्दछ । कहिलेकाही गीतबाटै प्रेमको सम्बन्ध कायम भएर विवाहसमेत हुन्छ । यस्तो बखतमा गीतबाटै आफूले जान्न चाहेका वस्तुको सवाल गरिन्छ र त्यसको जवाफ गीतबाटै पाइन्छ । बीचबीचमा लामो भट्याउने र थेगो मारेर कानमा हात राखी तीखो स्वरमा भाका भिक्ने असारेको आफ्नो विशेषता हो । असारे गीत गाउनु शुरू भएपछि यसको भाका र रसिला टुक्राले गर्दा-डाँडा-डाँडाका मान्छेलाई पनि एक ठाउँमा जम्मा गराउँछ ।

सानुमा सानु नरिवले हुक्का
झिरै लाईलाई खोलेर
नजली ज्यानको स्वर मात्रै सुन्छु
कता होला बोलेको
अमिलो मोहीले मेरो माया दुइले
कता होला बालेको
हरे राम राम बादलमाथि घाम
कता होला बोलेको
ढाकोमा बुन्ने त्यो हातको सीपले
गुन्द्री बुन्ने हतासो
महको गोली चरी तिम्रो बोली
उडाई ल्यायो बतासले

लेकको परी
पानी खान झरी
लाको सानु माया
जंघारलाइ तरी
माया लाउने नकलीले
हेर कस्तो कुरा गरी
दैवको लीला हरे
कठै नि बरी
माया लाउँला भन्दा भन्दै

जगलैमा परी
श्याल गिद्ध वरिपरि
सात दिनसम्म जंगलैमा लाश
स्याउँ स्याउँ कोरा परी
वायु डाक्दा आइ रुँदै
पिचासको रूप धरी
हे हरि कठै नि बरी
गाउँदा गाउँदै गाउँमा नै झरी
माया लाउने बानी
माया लाउँछु भनी
आको अघिसरी

हे पातली ज्यानको स्वर मात्रै सुन्छु
कता होला बोलेको
मिश्रीको गोली चरी तिम्रो बोली
कता होला बोलेको
दैवको लीला के भएको होला
कता होला बोलेको

युवती :- श्री कृष्णजीको गाईलाई सोसय
ल्याउने भन्दा लिन गो
अमिलो महिले मेरो माया गैले
केलाइ हकुम मर्जी भो

हरे राम राम बादलमाथि घाम
केलाइ हुकुम मर्जी भो ।
दैवको लीला के भएर होला
हत्ते प्राण हालेको

सत्तेमा सत्ते किन हाल्छौ हत्ते
तिम्रो हाम्रो माया बसे कल्ले दिन्छ पत्ते
यो जुनिमा हुने छैन काम तिम्रो फत्ते
तिमी जूता माया लाउने धेरै जना लत्ते
ढिकी जाँतो गर्दा गर्दै पारितिर पुग्थे
बाघजुङ्की छोरीलाई ताक्ने श्यालसिंहले
फन्दा पार्‍यो बोलिहाले अब किन बोल्थे

एके र मुठी त्यो जिरीको साग
नरम तेलमा झानेर
नबोलुँभने सुख पाइनँ मैले
बोल्यो फन्दा पारेर
हरे राम राम घुमी चारै धाम
बोल्यो फन्दा पारेर ।
दैवको लीला गयो अब बेला
बोल्यो फन्दा पारेर ।
युवक :—हरियो बल्लु हिमालको घूपी
बकैनो त बल्दैन

तिम्रो र हाम्रो हित चित्त मिल्यो
जात भात मिल्दैन
भातै र पाक्यो त्यो है गुदुगुदु
त्यो रूख राम्रो पातैले
तिम्रो र हाम्रो हितचित्त मिल्यो
के गर्छ रे जातैले
मल हाल्नु राम्रो आलो पटकेको
दूधै खानु थोरेको
नभुकी जावोस् माया प्रीति हाम्रो
बल्ल बल्ल जोरेको
हरे राम राम बादलमाथि घाम
बल्लबल्ल जोरेको
मेरो माया तिम्ले के भनेको त्यसो
बल्ल बल्ल जोरेको
तरकारी खाने मूला प्यूठाने
ठिमीले दाइको किस्मत
मयालु ज्यानको दर्शन नपाउँदा
दिन दिन लाग्छ बिस्मात।

युवती :—धान हैन तोरी बागवीरकी छोरी
उरालेर छर्नें जौ
तिम्रो माया गरी बस्छु जनमभरी
उरालेर छर्नें जौ

माछा बस्छ लेउमा आज तिम्रो छेउमा
धक फाएर बोल्न देऊ
मधेसे ज्यानको हेर मत्ता हात्ती
खान्छ रे पिपल खेपे बाग
नकल्ने ज्यानको मुहार नदेख्दा
मन हुन्छ एकतमास
हरे राम राम बादलमाथि घाम
मन हुन्छ एकतमास
दैवको लीला के भनेको होला
मन हुन्छ एकतमास ।

हरियो वल्ने त्यो धूपीको रूख
बास्ना चल्ने सालधूप
मान्छेकी छोरी बाँध्ने माया डोरी
खाइदेऊ जात भात खुपुक्क
भातै र पाक्यो त्यो है गुदुगुदु
रूख राम्रो पातले
जात र भातले मान्छे हुन्न राम्रो
मान्छे राम्रो मनैले
हरे राम राम बादलमाथि घाम
मान्छे राम्रो मनैले

## चण्डी पूर्णको वेलामा गाइने गीत  तामाग या दोहरी

चण्ड पूर्णेको वेलामा बाईसधारा नुहाउन आउने वेलामा यो तामाग सेलो बर्ता चल्ती हुन्छ। हुनत यो सेलो युवक-युवती भेट भएपछि गीतमै आफ्नो भावना पोख्दछन्। जुहारी जस्तै तामाग युवक-युवती गीतमै जवाफ सवाल गर्दछन्। यसलाई दोहरी खेल्ने पनि भन्दछन्। डम्फु र टुंगनामा तामाग सेलो खूब सुन्दर र गाउने मन लाग्ने हुन्छ।

*बारीमा डोंडा पारि माजा*
*नौ सय गीत नौ सय बाजा*
*मकै मुठी फूल खाजा*
*कान्छीको माया कान्छालाई*
*कान्छाको माया कान्छीलाई*
*दोहरी गीत भन्दै जा*
*दोहरी प्रीत लाउँदै जा*
*हाम्रो त घरको मूसाले*
*कोदो त खाँदै खाँदैन*
*दिनको तीन तोला घ्यू खान्छ*
*मूसा भन्दा बोल्दैन*
*धानचरी भन्दा ज्यू भन्छ*
*लेकलेक हिड्ने लेक मुर्गे*
*गरीबको छोरो दुइ भाइको*

कल्ले नि देख्ला भोक तिर्खा
कल्ले नि मान्ला पीरसुर्ती
वहर गोरू दाउने हो
न है चिट्ठी आउने हो
न है माया आउने हो
न है दर्शन पाउने हो

गहुँ काटी ठोसर छ
यो मन मेरो रोइरहन्छ
पापीको मायाले यहाँसम्म
नरो भन्ने को हुन्छ।

पापी माया कलकत्ता
कता हो कता बेपत्ता
आकाश ज्यानको निरह
कसरी थामुँ विरह

सिरूमा पाते खुकुरी
फुकूलेर गयो थाह छैन
चिट्ठी र पत्र आउँदैन
मरेको ज्यूँदो थाह छैन

युवक :— वरपिपलको चौतारी
वारै सुरमा बिसाउने
कोरले बोलचाललाई
रिसाउने कि खुसाउने

युवती :— मैसी त चने रछान गो
मेरो दुला कान्छाले
आजको सैबुन दिनमा
कम्तो कुरा भन्ने हो

युवक :- दन्तमा लाउने लाल बीरे
चोलो त लाउने कस्मीरे
पिरती लाउन हुन्छ कि
माया त लान हुन्छ कि

गैरी खेतको मार्सी धान
असिनाले उठायो
दशै अम्ला हात जोरी
मेरी ठूली कान्छीलाइ
हजुर बिन्ती चढायो

सन्दुस खोली क्यै छैन
सानो छ कन्तुर खोलेर
च्यान्टे त पैसा छानेर
मेरी ठूली कान्छीलाई
सोधनी गर्‍यो बसेर

उँभो त सेलुंग लंकेमा
घाँसै काट्यो जान्नेले
एउटा बिन्ती चढाउँछु
सुनेर बस तपाईले

सुरुवालमाथि मयलपोस
मेरी ठूली कान्छीले
आजको संवुग दिनमा
शीतल वचन मर्जिहोस्
लौ लो कान्छी मर्जा होस् ।

युवती :—फारिया लाउने मार्किनका
चोलो त लाउने ताराचिनको
मेरा त ठूला कान्छाको
बोली त सुन्छु हार्बिनको
उँभो माउ चिनमा
आजको यिन दिनमा
मेरो ठूला कान्छाले
कस्तो कुरा भन्ने हो
फूलका माला उनौला
लौ लौ कान्छा भन्नुहोस्
अल्लारे ठूली कान्छीले
एक छेउ बसी सुनौला ।

युवक :—गैरीमा खेतको रोपाईँलाई
सानोमा विन्ती चढायो
पिरती लाउने मनले
ठूली र कान्छी तपाईंलाई

उँधो त जाने किराती
लाउन त लाउला पीरती
बरपीपलको चौतारी
चार सुरमा बिसाउने
पीरती लायो मनदेखि
मन छ कि टूलीको रिसाउने

फूलको माला उनौला
मेरी टूलीको त्यो बोली
बाबुको छोरा बीरले
एक छेउ बसी सुनौला

मेरी टूली कान्छीले
माया र प्रीति जोर्नु हं स्
लौ लौ टूली भन्नुहोस् ।

युवती :—मोहर छानौ दाम गनौ
मेरा टूला कान्छाले
पीरती लाउने मनले
सुन्नुहोला म भनौं

फूलै लाउने सिरमा
टूलेसग रिसाउन
शखा छैन उठाउन
धन्दै छैन त्यसमा

मर्दकी छोरी ठूलीले
बाबुको वचन नाघेर
लाउँदैन प्रीति ख़ुशीले
खसमको धर्म छाडेर
बाबुलाई ज्यूँदै मारेर
पिरती लाउने कसरी
धर्म र सत्य छाडेर

मानिस ज्यूँदै बस्दैन
कालले कसलाइ सोच्दैन
बाबुकी छोरी कान्छीले
पिरती यसै लाउँदैन।
उ जुनिको पापले
यो जुनिमा दुःख भय।
बैंसको चल्दो उमेरमा
खसमसग बिछोडमा
दैवको आँखा छोपिन्न
यो जुनि फेरि पाइन्न

मरे त स्वग जादैन
पिरती जेठू लाउँदैन
अल्लारे ठूली कान्छीले
पिरती लाउँदै लाउँदिन

युवक '--आसीले काठ काटेन
भैसीले घांस खाएन
अबत पिरती खोज्दैन
कान्छीले पनि ओटेन

मेरी ठूली कान्छीलाई
बाबुको छोरा कान्छाले
मनमा ईख राख्दैन
धन्दै छैन तिमीलाई
बाबुको छोरा वीरेले
बाबुकी छोरी कान्छीलाई
करले माया लाउँदैन
करले पाउँदै पाउँदैन
मेरी ठूली कान्छीलाई
अल्लारे ठूला कान्छाले
वचन ठूलो लाग्ला कि
सलाम सलाम पाउलागी
सलाम सलाम, पाउलागी
है पाउलागी

## श्रावण भाद्रमा गाइने गीत सिलू लोकगीत

नेपाली लोकगीतको इतिहासमा सिलु लोक-गीतको पनि प्रमुख स्थान छ। यस गीतमा एक जोडा पति पत्नी सिलु तीर्थ

अर्थात् गोसाईकुण्डमा जाँदा बिछोड भएको कुरा दर्शाइएको छ तापनि सयोगान्त रूपमा यो गीतलाई अन्त गरिएको छ ।

अबेर घर फर्केको आफनो पतिसग पत्नीले आफ्नो उत्सुकता यसरी पोख्छे ।

*हाय रे हाय प्रभु स्वामी कहाँ गे आज आउनुभो ?*

पतिले आफ्नी स्त्रीको शका भेटाउन यसरी जबाफ दिन्छ ।

*धन्दा किन यो सुर्ता किन आफ्नै कामको निति हो ।*

अनि फेरि पत्नीले आफ्नो खेद प्रकट गर्छे—

*हामी दुइको बीच पनि सल्लाह कति नै छैन रे ।*
*कहाँ जानुभएको आज हाय कहाँ जानुहुन्छ रे ?*

यसको जबाफ पतिले यसरी दिन्छ :—

*सिलु तीर्थ नुहाउन पाए ठूलो यश पुण्य हुन्छ रे ।*
*सिलु तीर्थमा जानलाई गएँ मत साथी खोज्न रे ।*
*साथी खोज्ने किन स्वामी जाऔं तीर्थ हामी दुवै ।*
*पतिपत्नी तीर्थ गए ता झन् अति नै पुण्य हुन्छ है ।*

तर सिलुतीर्थमा पतिपत्नी एकसाथ जाँदा बिछोड हुन्छ भन्ने परम्परागत धारणामाथि विश्वास पतिले लिन थाल्छ ।

*हामी दुवै जानलाई जोशी देखाउनुपर्छ रे ।*
*जोशी देखाई हेरे प्रिया,*
*तर हाय बिछोड हुन्छ रे ।*

तर यो पुरानो रूढीवादी परम्परामाथि पत्नीको विश्वास हुन्न र ऊ यस परम्परालाई तोड्न चाहन्छे । अनि ऊ आफ्नो

पतिको पछिपछि लाग्छे। तर पतिले उमलाई आफ्नो ढिपी छोड्न अनेकौ प्रयत्न गर्छ। उ मान्दिन र अर्गांवर सिलुतीर्थ पुगी छोड्छे। य त्तकैमा उ..को सौन्दर्यमाथि मोहित भई राजाले उमलाई हरेर लैजान्छन। विछोडको वेदनाले तडपिएर पति-चाहि आफ्नो घर फर्कन्छ र फकीरको रू। धारन गरी देश देशान्तर घुम्न जाने विचारले वाहिर निस्कन्छ। उता राजाले उमलाई रानी बनाउन प्रयत्न गर्छ।

*धन्दा किन लिन्छौ रानी यो सुर्ता किन लिन्छयौ तिमी।*
*धेर सुकुमारी केटी दिन्छु नोकर चाकर सबै।*
*हीरा मोती जुहार पन्ना राम्रा राम्रा दिन्छु सबै।*
*हे रानी, त्रिपासा खेलौ जाऔं भित्र हामी दुवै।*

स्वच्छ तथा अगाध प्रेमको प्रतीक राजदरवारको विलास-लाइ ऊ तिलाजली दिन खोज्छे र चातुर्यद्वारा राजदरवारको वन्धनबाट फुत्कन खोज्छे।

*मेरो बिन्ती सुन्नुहोस राजै,*
*मेरो बिन्ती लागोस् है।*
*चातुर्मास व्रत ल मेरो यो पूरा गर्न दिनुसन हे।*
*प्रजागण सबैलाई अनि भोजन गराउनुपर्छ है।*
*अधिराज्यका जोगी सबै सामेल गराउनुपर्छ है।*

व्रत सागेको दिन आफ्नो चातुर्यद्वारा फुत्को जोगिनीको भेषमा उमले जोगीको भेषमा आएका आफ्ना पतिलाई भेट्न पुग्छे र दुवे त्यहाँबाट आफ्नो घरतिर जान सफल हुन्छन्।

*धन्य धन्य मेरो कर्म फेरि मेले पाएँ प्रभु रे ।*
*यहाँ किन बसौं प्रभु स्वामी जाऔ आफ्नो घर रे ।*

यसरी यो गीत सयोगान्तमा समाप्त हुन्छ । यो गीत श्रावण भाद्र महीनामा गाइने चलन छ ।

किनभने सिलु तीर्थ अर्थात् गोसाइँकुण्डमा जाने मेला पनि यही महीनामा पर्छ । यसरी यस गीतमा एक नारीको आफ्नो पतिप्रति भएको अगाध प्रेम तथा स्नेहले राजमहलको विषय-वासनालाई पनि चुनौती दिइएको छ। यो गीतले नेवारी समाजमा लिन सकेको व्यापकता नै यसको विशेषता हो ।

## (च) कथानक गीत

वास्तवमा नेपाली लोकसाहित्य नेपाली समाजको ऐना हो । गीत, गाउँखाने कथा, लोककथा, उखानटुक्का, कथानक गीत नै लोक साहित्यका भण्डार हुन् भने रोदी घरमा युवक-युवती गीतको सृजना गर्छन् । रोदी घरको आँगनमा पूवा कात्न बसेकी बूढो आमै उखान-टुक्का झिक्दछिन्, अनि वरि-परि बसेका सानासाना भुराहरूलाई बौद्धिक वृद्धि गर्न गाउँ-खाने कथा झिक्दछिन्, अनि ढुगामुढा पशुपन्छी बाघ-भालु आदि जीव-जन्तुलाई मानिसको भाषा बुझ्ने तुल्याएर लोककथा जन्माउँछिन् । त्यस्तै माइतबाट घर गएकी चेली र पँधेर्नी दिदी, घटेरी बहिनी, विधवा फुपू, बैंमालू नानी, आफ्ना मनका भावलाई लयमा बाँधेर च्यूरा कुट्दा वनपात जाँदा

कथानक गीतको सृजना गर्दछन् । जिभ्रोको टुप्पामा अड्ने यी गीतहरू गाउँ गाउँ पुगेर बढ्ने घट्ने गर्दछन् ।

यसै सिलसिलामा प्रस्तुत छ पश्चिम १ नम्बरतिरको एक कथानक गीत, मैतालु चेली । यस्तै गीत पूर्व आठराई धनकुटा र पश्चिम पाल्पातिर बागलुगतिर पनि पाइन्छ । धेरै कुरा मिल्दोजुल्दो भए पनि कतै लामो कतै छोटो, कतै आफ्नो गाउँको विषयसँग गाभिएको हुन्छ । यस गीतमा पश्चिम १ नबरतिरको रहनसहन बारे प्रकाश पारिएको छ । घरमा आएको ज्वाईलाई भएसम्म मान्ने प्रथा र विवाह गरेको वर्ष माइत बसेकी छोरी शुक्र अस्तमा घर पठाउन हुन्न भन्ने अन्धविश्वास र स्नेहको सम्बन्ध दरिलो भएका वखत कुनै घटना घट्न गएमा त्यस व्यक्तिलाई सपनामा मानसिक सूचना हुने कुराको झल्को यसमा दिएको छ ।

## मैतालु चेली

*मादलै बज्यो धिन्तांगमा धिन्तांग*
*आहै ढोल बज्यो घुमघुमती*
*यत्तिका बैसमा घरबार छैन*
*म घुम्छु फनफन्ती ।*
*बेतको लौरो नि छिर्लिङ्गै बज्यो*
*बाहिर हेर हे मेरा दाज्यै*
*को आयो पाहुना*

फुकेको छ कि कुकुरको गला
मुक्दछ वेसरी
डाकन डाक हे मेरा दाजै
त्यो पांग्रे डाम्नालाई ।
मान्द्रीमा फोइदेऊ हे मेरा दाज्यै
मान्द्रीमा फोइदेऊ
मान्द्रीमा बस्ने आएको रैनछ
घुमराडी बिछ्याइदेऊ
हे मेरा दाज्यै, घुमराडी बिछ्याइदेऊ ।
राडीमा बस्ने त्यो मान्छे होइन
चकटी बिछ्याइदेऊ
हे मेरा राजै तगेको चकटी
जोर पारी बिछ्याइदेऊ ।
चकटी होइन हे मेरा दाज्यै
बाघको छाला बिछ्याइदेऊ
बाघको छालामाथि बस्दैन दिदै
मेतालु पठाइदेऊ ।
सामु छ शुक्र यसैमा वर्ष
पठाउनु हुँदेन हे मेरा जुवाइँ !
पठाउनु हुँदैन
हे मेरा जुवाइँ !
पठाउनु हुँदैन ।

वैशाख पन्ध्रै भाइको बिहे
नपठाई हुँदैन दिदै
नपठाई हुँदैन ।
बाबाले घरमा
नल्याएदेखि म बस्नुपर्दैन
बाबाको वचन नहाल खेर
तोलाको वचन खेलामा परे
म बस्नुपर्दैन ।
बाबाको वचन मनमा धरं
मनमा धरे हे मेरा जुवाइँ !
पठाउनु हुँदैन ।
आएको मान्छे फर्केर जान्न
नलिईकन म यसै जान्नँ
बाबाको वचन मनमा राख्न
किमार्थ हुँदैन ।
ओर्ल न ओर्ल हे मेरी रानी !
भाइको बिहे पर्‍यो
ओर्ल न ओर्ल हे मेरी चेली !
कपालै कोनुपर्‍यो ।
मादलै बज्ला धिन्तांगमा धिन्तांग
ढोल बज्ला घुमघुमती
नौ सय जन्ती नौ बाजा

नरसिंहे बाजा
दमाई बाजा बजाई जाला
झ्केरू जाला
वासको ढुंग्रो बांसको कॉंगियो
चुरा र पोते तेल र फूल
जन्तीको बथान
हूलका हूल
छ मुरी चामल बुत्याउन सक्ने
३ बीस घारी छ छैन केरा
एक मुरी लाग्ला खुदो र सख्खर
एक मुरी लाग्ला एक राते दही
पॉंच पाथी लाग्ला सिलामको अचार
जन्तीलाई ख्वाउन
हे मेरी चेली, बिहे छ भाइको।
हे मेरी चेली, फर्केर आउली
एक सातापछि नै
हातैमा लाऊ बाला र चुरा
गोडैमा कल्लीया
शिरमै लाउ शिरफूल ठूलो
माथैमा शिरबन्दी
नाकैमा लाउ नथिया चेली
कानैमा लाउ ढुंगरी

गलामा लाउ नौगेडे माला
पोते र तिलहरी
छातीमा लाऊ जन्तरू ठूलो
हलेसो लाऊ कुण्डलु पाउ
रेसमी चोलो
रेसमे सारी
पछ्यौरी ढाकाको
निधार राम्रो सिन्रिक रातो
हातमा बज्ने डबल चुरा
आँखामा नानी गाजले कोश
हे मेरी चेली बिहे छ भाइको।
हे मेरी सासु पठाइदेऊ चेली
बिहे छ भाइको।
ओर्ल न ओर्ल समरथ चेली
एक दिनको बाटो काटेर जुवाइँ
आएछन् लिन
भाइको बिहेलाई
कपालै कोरी देऊ है चेली
कपालै कोरिदेऊ।
ओर्लिन्नँ आमै कोर्दिनँ कपाल
म यसै नै जाउँला
हुँदैन भन्दा नछाड्ने ढिपी

म यसै जाइ-जाउँला ।
हातैमा लाउन्नँ हे मेरी आमै !
बाला उ चुरीया
शिरमा लाउन्नँ शिरफूल पनि
गोडैमा कलिया
माथैमा लाउन्नँ शिरबन्दी पनि
नाकैमा नथीया ।
कानैमा लाउन्नँ ढुंगरी आमै !
छातीमा जन्तरू
लाउँदिनँ आमै नौगेडे माला
कानैमा कुण्डलु ।
रेसमे चोली लाउँदिनँ आमै !
पछ्यौरी ढाकाको
-हुँदेन भन्दा नछोड्ने ढिपी
म यसै जाइजाउँला ।
अल्लारे चेली, नभन त्यसो
के भन्ला जोरीले
ससुराज्यूले देखेमा चेली
जुवाईलाई हकार्लान्
सम्धिनिज्यूले देखेमा चेली
गहमा आँसु पारेर हेर्लिन्
जेठाजुले देखेमा चेली

इज्जत गयो भनेर रोलान्
देवरज्यूले देखेमा चेली
आटैमा जन्ती फर्काई आउलान्
जटानीज्यूले देखेमा चेली
नाक छोर्पा हाँसलिन्
देवरानीज्यूले देखेमा चेली
कोखेला बजाउलिन्
नन्दमाज्यूले देखेमा चेली
खुसिड भन्नेछन्
आमाज्यूले देखेमा चेली
खाइथिस् भन्नेछन्
हे मेरी चेली, खाइथिस् भन्ने छन् ।
माइज्यूले देखे हे मेरी चेली
रोई रोई मनेछिन्
भाइले देखे हे मेरी चेली
लाहुर झर्नेछन् ।
ओर्ले न ओर्ले समरथ चेली
कपाल कोरिदेऊ
गहन पहिरिदेऊ
एक दिनको बाटो जुवाइ आए लिन
लौ लुगा पहिरिदेऊ
जाऊ है घर तही है चेली

जाऊ है घर जाऊ ।
गएँ है गएँ घर है आमै
गएँ है घरमा
नरोए आमै, नपुछे आँसु
म जाने बेलैमा ।
निदारमा लाइदेऊ दहीको टीको
सिम्रिक मुछेर
हातमा देऊ दहि र केरा
सगुन भनेर
आशिष देऊ हे मेरी आमै,
कपाल पनि नदुखोस् भनेर ।
दुःखमा परे हे मेरी आमै,
चरोको हात सम्चार पठाउँला
सुखमा परे हे मेरी आमै,
भरिया खोजी
कोसेली पठाउँला
सगुनको टीको लाइदेऊ आमै,
दशैंमा आउँला ।
उकाली ओराली त्यो काली पाखा
हुरुक्क मलाई बाडुली लाग्ला
सम्झँदा आमैले
उकाली ओराली बाडुली लाग्ला

सम्झँदा दाज्यूले ।
उकालीओराली त्यो काली पाखा
टेस है लागी रगत झर्ला
भाउजुको सरापले
उकाली ओराली त्यो काली पाखा
टेस है लाग्दा रगत झर्ला
नन्दको सरापले ।
बेहोश चेली भन्नेछन् मलाई
सासुले झर्केर
मरुँला आमै तिम्लाई सम्झेर
अगेनी बसेर
सिमसारको लेकमा पानी है पर्‍यो
चामल च्यूरा गहत छाटा
असारे अचार सत्तु र सामल
निसक्कै भिजायो
ससुराज्यूलाई कोसेली ल्याको
निसक्कै भिजायो ।
हिडन हिड समरथ चेली
सिमपानी वर्षेको ।
सिम पानी सिमसिम
दर्केर आयो हे मेरा दाजे
कहाँ गै बसूँला !

बिस्यौनी पर्छ शीतलु पाटी
हे मेरी चेली तहि गे बसुँला ।
को ल्याउँछ दाउरा
को ल्याउँछ पानी
को बस्छ भान्छैमा
हे मेरा दादै को बस्छ भान्छैमा !
नमान सुर्ता नमान धन्दा
हे मेरी चेली
म ल्याउँला दाउरा
म ल्याउँला पानी
म जाउँला भान्सैमा ।
दैवको लीला हरे रुठै बरा
हुरीमा आयो बतास आयो
बिजुली चम्क्यो चटयांग पर्‍या
पहरो लड्यो
छहरो झर्‍यो
मैतालु नानीलाई ढुंगाले थिच्यो
सुतेको सुत्यै
मै गइन् भुतुवक ।
बारूले कम्बर
फुकेको ढाड
सलसलाउँदी

कलकलाउँदी
दोहरा आँगकी
हिउँ झै गोरी
बागवीरकी छोरी
सै गइन् भुतुक्क ।
बाबाले भन्लान् घर गइन् छोरी
ससुरा भन्लान् आउलिन् बुहारी
दैवको लीला हरे कठै बरा !
के मरन लेखेछ ।
आमा त भन्दिहुन् घर गइन् छोरी
सासू त भन्दिहुन् आउली बुहारी
दैवको लीला हरे कठै बरा !
के मरन लेखेछ ।
दाज्यू त भन्दा हुन् पठाएँ बैनी
जेठाजु भन्दा हुन् आउँन्छिन् बहू
दैवको लीला हरे कठै बरा !
के मरन लेखेछ ।
भाउजु भन्दिहुन् पठाएँ नन्द
जेठानी भन्दिहुन् आउँछिन् बैनी
दैवको लीला हरे कठै बरा !
के मरन लेखेन्छ ।
भाइले भन्दा हुन् पठाएँ दिदै

देवर भन्दा हुन् आउँछिन् भाउजु
दैवको लीला हरे कठै बरा !
के मरन लेखेछ ।

दिदीले भन्लिन् पठाए बैनी
बैनीले भन्लिन् पठाएँ दिदै
आमाजु भन्लिन् आउछिन् बहू
आमाजु भन्छिन् पठाएँ नन्द
दैवको लीला हरे कठै बरा !
के मरन लेखेछ ।

बाबुको वचन शुक्रको ग्रह सामुन्ने परेछ
आमाको वचन शनिको ग्रह पाउमा परेछ
के मरन लेखेछ ।

रित्तै छ डाली रित्तै छ खाली
कहाँ हालिस् मैतालु
खोइ ल्याइस् मैतालु !

नसोध मलाई हे मेरा बाबै
नसोध मलाई हे मेरी मुमा
नसोध मलाई हे मेरा दाज्यै
नसोध मलाई हे मेरी भाउज्यू
नसोध मलाई हे मेरा मामा
नसोध मलाई हे मेरी माइज्यू

म चल्छु विदेश
मै चल्छु विदेश ।
एकै र हात बन्दुकी देऊ
एकै र हात खुकुरी देऊ
तर्वार देऊ बर्छिया देऊ
चटक्क मलाई छिनाइदेऊ
मलाइ मारिदेऊ ।
हुरिया आयो
बतास आयो
पैरामा गयो
ढुंगिया लड्यो
छातीमा थिच्यो
पाटीमा मरिन्
भुतुक्क परिन्
हे मेरा बाबै भुतुक्क परिन्
दैवको लीला
हरे कठै बरा ?
हे मेरी आमै
भुतुक्कै भइन्
बोल्न नै पाइनँ
हे मेरी आमै
बोल्न नै पाइनँ ।

*बाटै र मुनि नगाडिदेऊ दाज्यू*
*बटुवा थुक्दछन्*
*बाटै र माथि राखिदेऊ दाज्यू*
*देउराली पुग्दछन् ।*
*हरिमा हरि सुन कठै बरी*
*उ मरी भुतुक्क ।*

उता माइतमा गएको राती मैतालु चेलीको दाज्यूले सपना देख्दछन् ।

*गएको राती सपना देखे*
*हे मेरी आमै, सपनी देखे नि*
*मैतालु चेलीलाई सपनी देखें नि*
*भरिया खोज्यौ*
*कोसेली ल्याइदेउ*
*म भेटी आउँछु नि*
*आमै, म भेटी आउँछु नि !*
*चिउरा कुट्दा सिरौला भए*
*चामल कुट्दा खडेउली भए*
*भीरबाट लडे*
*बंगारा झरे*
*कुकुर भुक्यो*
*पाडाले लंघाऱ्यो ।*

हे मेरी आमै के देखे सपना
कुराउनी पकाउँदा बिगुती भयो
के देखे सपना ।
चुल्ठी बाटी गाजल लाई
सुतेको मैले
के देखे सपना ।
म भेट्न जान्छु
मैतालु चेली
के देखे सपना ।
टाढाको बाटो हुँदैन जान
भान्सामा तयार छ हे मेरा बाबु,
भान्सा नै गरी जाऊ ।
आउँदिन आमै गर्दिनँ भान्सा
मैतालु चेली नभेटेसम्म
म भातै खाँदिनँ
मैतालु चेली भेटेर आउँछु
मै हिडिहाल्दछु ।
समुन्द्रै तर तिखैंले मरे
बाहिर निस्क मैतालु चेली
पानी हे खान देऊ ।
तिमरी वैनी छैनन् है जेठान
गाइगोठ मुनि हे हैरे जेठान !

*गाई र गोठको बाटो हैं आएँ*
*खै मैले भेटिनँ ।*
*तिमरी बैनी छैनन् हे जेठान*
*भैंसी गोठ खोजन ।*
*भैसी र गोठको बाटो है आएँ*
*खै मैले भेटिनँ ।*
*समुन्द्र तरे तिर्खाले मरे*
*पानी है खान देऊ*
*मैतालु चेली*
*लौ पानी खान देऊ ।*
*तिमरी बैनी छैनन् है जेठान*
*भेडी गोठ हेर्न जाऊ ।*
*भेडी है गोठको बाटा है आएँ*
*खै मैले भेटिनँ ।*
*कति म ढाँटु कति म छलुँ*
*हे मेरा जेठान*
*दैवको लीला हरे कठै बरा !*
*परलोक भै गइन्*
*स्वर्गवास भै गइन् ।*

यस्तै डाँफेको सपना अर्को कथानक गीत हो ।

जाडो लागेपछि पहाडका मानिसहरू जाडो छल्न तराई र अन्य विदेश झर्दछन् । यसरी घर छाडेर जाँदा विदेशको रहन-

सहन र झिलिमिलीमा एक सोझो मान्छे कसरी फँस्दछ भन्ने कुराको बयान बिभिन्न ढगबाट गाइनेहरूले गर्दै हिँद्दछन्। साथै यस डाँफेको गीतमा गाउँको रीतिस्थितिको पनि बयान गरिएको हुन्छ । यसमा लोकगत सग्रहकर्ताले व्याकरणमा ध्यान दिएको छैन। जस्तो लोकगीत कलाकारले गाए त्यस्तै सार्ने प्रयास गरिएको छ।

*नीर चर नौरंगे डाँफे लाहुरे बैसको*
*नीर चर नौरगे डाँफे भरखरे बैसको*
*नीर चर नौरंगे डाँफे थलथले बैसको*
*नीर चर नौरंगे डाँफे कुलकुले बैसको*
*कहा हो तिम्रो नौरगे डाँफे*
*जनमभूमि*
*कहाँ हो तिम्रो गाउँ ?*
*हिमालचुली नाकमा फुली*
*म भन्दा पनि थवकैमा ठूली*
*मायाले ठूली जनम लियौ गाउँ*
*पातीको झिजा खरूको घाँस*
*खन्याक खुरूक*
*खत्र्याक खुत्रुक*
*बनका झिजा बटुली ल्यायौ नि।*
*क्च्याक कुचुक*
*मच्याक मुचुक*

भच्याक मुचुक पारी
डाँफेकी आमाले गुँडै लायौ नि ।
छइ मास बरीखा दिन
दिनदिन डाँफेकी आमा
गर्भवास भइछौ नि ।
यता ढल्कँदा
उता ढल्कँदा
बाङखुट्टी तान्दा
डाँडै कर्काउँदा
आँखा पल्टाउँदा
चिच्याउँदा
कराउदा
ऐया बाबा मरें भनिछ्यौ नि ।
तल्ला घरका बूढा बाजे डाकिद्यौ भन्यौ नि ।
तल्ला घरको ठूलो भाले काटिद्यौ भन्देउ नि !
ज्वानोको झोल तोरीको तेल बनाइद्यौ भन्देउ नि ।
फनफनी घुम्दा
भित्ताको आडमा बल गरी बस्ता
सुरेली खेल्दै
बल्लतल्ल गर्दै
बाङखुट्टी तनक्क तानी
एउटा फूल पाऱ्यौ नि ।

२७ दिनको फेर पारी
डॉफेकी आमा
कवात कवात कवात कवात
कोरल्न लाग्यौ नि ।
२७ को फेरै पारी
डॉफेकी आमा
ट्वाक ट्वाक ट्वाक ट्वाक
चुच्चाले ठुंगी बच्चैमा काढयौ नि ।
चियाप चियाप
कराउन लाग्यौ नि ।
बिहानको झुलुक झुलुक्क
झुल्के घाम
पहेला प्वॉख झल्याकझुलुक
क्या कति राम्रो नि
दिनदिन नौरंगे डॉफे
बैसको भयौ नि
भर्खरे बैस
लाहुरे बैस
तन्नेरी बैस
कुकुरे बैस
चञ्चले बैस
हलहले बैस

सिर्सिरे बैस
फिरफिरे बैस
आँखा पनि झम्याक झिमिक गर्ने बैस
ढुगाले हानाहान गर्ने बैस
चिमोटाचिमोट गर्ने बैस
मालेको बैस
पोथीको बैस
यत्तिका बैसको नौरंगे डाँफे
घरबार छैन नि ।
यो पापी डाँफे सुतेको थियो
सपना देख्यो नि ।
नौरगे डाँफेले मुरली चरीको
सपना देख्यो नि ।
सपनाको मुरली चरी
भुरूरू उड्यो
लौन नि कहाँ गो !
सपनाकी मुरली चरी
च्याट परेकी
कम्बर छिनेकी
दोहोरो आङ्की
पुड्कीमा पुड्की
डल्लीमा डल्ली

नेप्टीमा नेप्टी
चेप्टीमा चेप्टी
अदुवाको कप्टेरा जस्ती
हलेदाको ठुन्का जस्ती
दरमतीका असला जस्ती
परेतीका पाटी जस्ती
उखलेका मूला जस्ती
पखालेका चाना जस्ती
हानेका काँढा जस्ती
पाकेका बिमिरा जस्ती
केराका थम्मा जस्ती
धनकुटे सुन्तला जस्ती
बट्टारे मास जस्ती
भीमढुगे उखु जस्ती
बियाबरको लप्सी जस्ती
मधेसको सुर्ती जस्ती
जुम्लाको ओखर जस्ती
३ फेरा पिटेको सुन जस्ती
पखालेको चामल जस्ती
पशुपतिमा माझेर राखेको गड्डुवा जस्ती
श्याम सुन्दर
पूर्विया मंगली

चिट्ठी स्याठ परेकी
नल्ला हाड सुकेकी
उपल्लो फुकेकी
सिन्दूर टीका गाजल मस्त लाएकी
मुरली चरी सपना देख्यो नि ।
सपनाको मुरली चरी
ब्यूँझदा कह, पाउँ
दक्षिण जान्छु है मेरी आमै
दक्षिण जान्छु नि ।
डाँफे चरीको सजुरो घरबार
कहींबाट भग्न नि ।
आजको रोहिणीमा
सपना देख्यो नि ।
पूर्वका जैसी राजाले मलाई सुहाउदो
घरबार सपना देख्यो नि ।
पूर्वका जैसी राजाले लगन देउफल
पश्चिमका जैसी राजाले लगन देऊ फल
मुरली चरीको देशमा जान
कुन दिन जुर्छ कुन बार जुर्छ
कुन घडी जुर्छ कुन लगन जुर्छ
लगन देऊ फल
मुरली चरी।ो देशमा जान

लगन देऊ फल
खरी पाटी धूलौटो राखी
लगन हेर्‍यौ नि ।
सात ब रेमा २७ नक्षत्र १२ राशि
१६ तिथि कुन राशि कुन बार राम्रो छ
खरीपाटी धूलौटी राखी
लगन हेर्‍यौ नि !
सातैमा बार जुन्याइ ल्याउँदा
आइतबारेले के भन्छ डॉफेलाई
सोबारेले के भन्छ डॉफेलाई
सभेर आउलान नि !
मगलबारेले के भन्छ डॉफेलाई
भार्गुला भन्छ नि !
बुधबारेले के भन्छ डॉफेलाई
बूढा भएछ भन्छौ नि !
बिहिबारेले के भन्छ डॉफेलाई
बिग्री लाउला नि !
शुक्रबारेले के भन्छ डॉफेलाई
हाइ सुख होला नि !
शनिबारेले के भन्छ डॉफेलाई
सात शनिश्चर लाग्ला नि !
यतिका जुरेको नौरंगे डॉफे

आइतबार निको छ
आइतबारको बिहानीपख
हमारी समारी समारी भन्नेमा
पाइला चालेछ
मुसी खोलाको तीरतीरे
खामो गाडेछ
छिनेको नाम्लो
फाटेको डोको
यो पापी डाँफेले पाइलो सारेछ ।
आइतबार बिहानीपख उडेको डाँफे
हरहर उडेको डाँफे नुवाकोट पुगेछ
नुवाकोट भैरवीको दर्शन गरेछ
नुवाकोट कत्तिका रैछ भैरवीलाई
साहित जुन्याइद्यौ
नुवाकोटबाट हरर उडेको डाँफे
ऋषेश्वर झरेछ
ऋषेश्वरको इ चिसो पानीमा डुबुल्की मारेछ
ऋषेश्वर महादेवको दर्शन गरेछ
ऋषेश्वरबाट हरर उडेको डाँफे
मालागाउँ झरेछ
मालागाउँकी मगनीलाई
मोहनीलाई धुरुक्कै रुवाएछ

झन् पर जान्छ काली देख्न
झन् पर जान्छ पुड्की देख्छ
झन पर जान्छ गॉडभाकी देख्न
डॉफे चरोले चटक्कै डाडेछ
न मलाई घर न मलाई माइती
यो पापी डॉफेले मिचैमा पार्‍यो नि ।
मालागाउँ देखि उडेको डॉफे
टलकटलक झल झझलक
गेना टल्केको चुरा झल्केको
बटौलीको बजार देख्न पुगेछ
बटौलीको बजार बसी
कम्मरै कसी
हातमा लिग्छ कलम र मसी
व्यापार गरेछ घुंडा घसी
बीस रुपियाँ हाली
मुरली चरीलाई
फरिया चोलो पटुका पछेउरी लिग्छ
पाच रुपियाँ हाली
गेना बट्टा धागो पोते थाँक्रो
चुरा पोते काइँयो
त्यत्ति थोक लिग्न्छ
सिन्दूरे बट्टा

कलसका ध्वजा
रेसमी सारी
साटनको चोलो
सानोमा सानो कुसुमे रुमाल
पाको र पुन्तरो पारेछ
गुलियो रोटी सेल र रोटी
सखर चिनी
दालचिनी ओखर
नरीवल छोरा
बदाम काजु
किसमिस तमाखु
गुडगुडे हुक्का
नघले पातो
खप्तरे नली
डाँफेले किनेछ
बटौलीबाट उडेको डाँफे बेसीमा झरेछ
गाई चराउने गोठाला दाज्यै
यो बिन्ती सुनिदेऊ
पानीमा भर्ने पनेर्नी दिदै
यो बिन्ती सुनिदेऊ
मुरली चरीको म घर जान्छु
मूल बाटो कहिदेऊ

पूरिब नजाऊ
पश्चिम नजाऊ
उत्तर नजाऊ
नौरगे डाँफे दक्षिण सोझै जाऊ
बेसीबाट उडेको डाँफ
मुरली चरीको धुरीमा पुगी
नौरगे डाँफे सुसेल्न थालेछ
ठूला घरकी नौरगे डाँफ
निस्कन पाइछौ
भित्र र बाहिर निमेक गरी
डाँफेलाइ हेरीछौ
पँधेरा जाने निहुँ नै पारी डाँफेलाइ भेटेछौ
धनक्के पाइलोको पाउना आएछ
लिपेको पिंढी
गूँदको गुन्द्री
चाँदीको हुक्का
सुनको फूली
झ्याल काटे चिलिम
फूलभरा नली
तमाखु भरी हे रानी चरी
डाँफेलाइ मानीछौ
विना साइतको यो तमाखु म खान्न भनेछ

बिना साइतको यो गुँदरीमा बस्दिन भनेछ
हे मेरा डॉफे साइत खोजी ल्या त झट्टै नि
हे मेरा डॉफे पुरानो साइनो नि
तिम्रा बालाइ हे डॉफे चरी
बाटामा भेट्दा ससुरा भन्थे नि
तिम्री आमालाइ हे डॉफे चरी
बाटामा भेट्दा सासू भन्थे नि
तिम्रा दाजुलाइ हे डॉफे चरी
बाटामा भेट्दा जेठाजु भन्थे नि
तिम्रा भाइलाइ हे डॉफे चरी
बाटामा भेट्दा देवर भन्थे नि
तिम्रो र हाम्रो हे डॉफे चरी बोलाउने साइनो
सोल्टी भनुँला नि
अच्छै भन्यौ नौरगे डॉफे
भलो बात कह्यौ नि
तिम्रो देशको के के हो खाना
अमला कमला
मलाई कहिद्यौ
हाम्रो देशको खानु र लाउनु
मुरली चरी म कहीदिउँला नि
चैत्र आउँछ वैशाख आउँछ
काफलु पाक्छ, असेतु पाक्छ

ऐसेलु खाउँला काफलु खाउँला
देह हुन्छ शीतलु
चैत्र आउँछ वैशाख आउँछ
गुयेली पाक्छ गुयेली खाउँला
पहरा मुक्ति छ चिसो पानी
कुलकुले कुलकुले प्यूँला नि
ऐसेलुको बोटमुनि धुलौटा खेलौला नि
तिम्रो देशको के के खानु
मुरली चरी हामीलाई कहिद्यौ
हाम्रो देशको नौरंगे डाँफे
म पनि कहुँला
वर्षामा लाग्ला नौरंगे डाँफे गाउँमा सरौला
हिउँद लाग्ला नौरंगे डाँफे ब्यासीमा झरौला
हाम्रो देशको खानु र लाउनु
तीन पाटनका फाँट बेग हानौला
हाम्रो देशको खानु र लाउनु
नीलुवा झिनुवा
बासमति चरी नगरे प्रान प्यूरी
माल्ल मोल कृष्णभोग रामविलास
समुन्द्रै फेन कनक जीरा
हे डाँफे चरी बेसरी बसी
घुडा घसी घसी, कम्बर कसी

धानको भोग लगाउँला
रूखकटहर भुईंकटहर
आँप र लिच्ची, नरिवल खजुर
हे मेरा डाँफे खानु होला हजुर
खरबुजो तरबुझो, मक्कै र बयर
हे मेरा डाँफे खानु होला हजुर
लौन नि लौन फसाद पऱ्यो
हे डाँफेचरी यो गाउँको उल्लु
झाझरे बूढाले तिमीलाइ ताकेछ
झाझरे थपथपाउँछ आलीमा बसेर
हाम्रा गाउँमा यो नौलो चरी
कहाँबाट आयो भुरुरु उडेर
लौन नि लौन नि हे डाँफे चरी
झाझरे बूढा दागा नै धरेछ
छः महीनाको निमेक गरी
खोरिया फाँडेछ
टयाक टयाक टुक टुक
पटयाक पुटुक
हे मेरा डाँफे डल्ला फुटाएछ
काल्टा र काम्ला फिजे जस्तो
कोदो छरेछ ।
दिनदिनको निमेक भारी

ब्यॉसीमा भरेछ ।
घोडाको पुच्छर, दाँतले च्यापी
साप्रामा राखी, ब्यरवले माभी
लसक्क लसक्क, चसक्क चसक्क
हे मेरा डॉफे पासो नै बाटेछ
खोरियाको छेउछाउमा
हे मेरा डॉफे त्यो पासो थापेछ
एकै र दिनमा हे डॉफे चरी
भोकले जाँदैनौ
दुवै र दिनमा हे डॉफे चरी
भोकले जाँदैनौ
आजको रोहिणी हे मेरा डॉफे
ननिको देख्यो नि
शिरमा हेर्‍यो नौरंगे डॉफे
कलकी भिकेको
निदारतिर नौरंगे डॉफे
पटिया सारेको
नजरतिर नौरंगे डॉफे
गाजल सारेको
ठूँडतिर नौरंगे डॉफे
रूपले बाँधेको
गलामा तिम्रो नौरंगे डॉफे

पुवालो सारेको
ढाडमा तिम्रो नौरंगे डाँफे
ढलौट सारेको
पखेटा तिम्रो नौरंगे डाँफे
पौ पंखा सारेको
पुच्छर तिम्रो नौरंगे डाँफे
नील तूथो सारेको
गोडा छ तिम्रो नौ रंगै डाँफे
सीसा नै गाडेको
धूपीको रंग, सुन्तले रंग
आकासे रंग, गुलाफी रंग
गोलीको रंग, ध्वाँसे रंग
पुवाले रंग, तुँवाले रंग
हिउँको रंग
नौरंगे डाँफे क्या राम्रो सुहायो
आजका रोहिणीमा
यो सपना देखे
३ नै दिनका भोकले
यो डाँफे मर्दैन
चौकमा आए, पानी तिर्खाए
मुरली चरी मरनै लागे नि
मुरली चरीको देशबाट उडेको डाँफे

खोरियाको छेउमा थपक्क बस्यो नि
काल्टो काम्लो फिजे जस्तो
कुसुमे रुमाल रंगाए जस्तो
पौ जुरो पाकेको नि
खोरियाको छेउमा बसी
एक जुरो कोदो डॉफेले खायो
लौ कति मीठो नि
भोकको झोंकमा हे मेरा डॉफे
कोदाको जुरो झन् मीठो लाग्यो नि
यो जुरा टिपी मुरलीलाई लगिदिऊँ भन्दा
मन्टैमा पासो नि
नौरंगे डॉफे मन्टैमा पासो नि
ढुकेर बस्या लुकेर बस्या
झ्याल तापी बस्या न्याल काढी बस्या
झाक्रे बूढाले नौरंगे डाफे
पासोमा परेको देखिनै हाल्यो नि
हॉ हॉ गऱ्यो सुसेली पठायो
घोचो उठायो, भुतुक्कै पाऱ्यो
दैवको लीला
नौरंगेलाई, भुतुक्कै पाऱ्यो नि
कऱ्याक मऱ्याक जानीमा हाल्यो नि
घुँडाका भर मन्टाका भर

लेकमा उक्ल्यो नि
बाहिर निस्की गनगने बूढी
क्या चीज ल्याए नि
यत्तिको राम्रो नौरंगे डॉफे
हे पापी बूढा केलाई मार्‍यौ नि
न छोरा थिए न छोरी थिए
आफैले पाल्थे नि
यत्तिको राम्रो नौरंगे डॉफे
हे पापी बूढा केलाई मार्‍यौ नि
नकरा नकरा गनगने बूटी
तातो झोल प्यूलिस् नि
गाउँलेले सुने चौपट्ट गर्लान्
भाग कति पुग्ला नि
यति राम्रो नौरंगे डॉफे
यो पापी बूढाले पोल्न लाग्यो नि
यति राम्रो यो नौरगे डॉफे
यो पापी बूढाले कुड्क्याउन ला यो नि
यो यति राम्रो नौरंगे डॉफे
तेल तताई मेथी पड्काई
यो पापी बूढाले भुट्न लाग्यो नि
गाउँ गाउँका गोरी मिजार
बोलाउन लाग्यो नि

भारामाथिको मांगमुगे ध्याम्पो
झिकी ओह्राल्यो नि
सुनखानीको सुन बटुकी
मिजारलाई दियो नि
चादीको बटुकी
बूढीलाई दियो नि
फलामे खानीको पुच्छर बटुका
आफूले लियो नि
डॉफेको मासु कुरुं कुरु
कोदोको हुर्रें सुरुं सुरुं
क्या कति मीठो नि
बूढो मादले, बूढी मारूनी
धिन्तां धिन्तां नाच्न लागे नि
धानका दाता रे मकैका दाता रे
तारीफ लाउला नि
नौरंगे डॉफे बिकालमा पऱ्यो
बिष्टासग पाइल जाउला नि
डॉफे, पराको गीत गाउँदा गाउँदै
दिन गयो फूलुक्कै
सपनाबाट ब्यूँझियो डॉफे
रूखमा पुलुक्कै ।

# उपसंहार

## नेपाली लोकगीतको महत्व

•

वास्तवमा नेपाली लोकसाहित्यको आफ्नै विशिष्ट परम्परा र पन छ। स्वर्ग र मर्त्यको साँधस्वरूप बादलको जटा गुँथेका उत्तुग शिखरहरूले शोभायमान भएको, मेचीदेखि महाकाली-सम्मका नेपालीको पसीनाले बाउँसे गरेको सुन्दर शान्त धरतीमा बसोवास गरेका विभिन्न जाति तथा समुदायको सुख-दुःख, जय-पराजयलाई अभिव्यक्त गर्ने नेपाली लोकसाहित्यमा विशुद्ध रूपले नेपाली जनमानस अभिव्यक्त भएको हुन्छ भन्नु अत्युक्ति हुनेछैन। लिखित साहित्यमा प्रबुद्ध तथा शिक्षित समाजको मानसले अभिव्यक्ति पाएको हुन्छभने अलिखितरूपमा प्रचलित लोकसाहित्यमा अधिकाश जनसाधारणको मानसले ठाउँ ओगटे-को हुन्छ। नेपाली लोकसाहित्य यसैले लिखित साहित्यको अपेक्षा अधिकाश नेपाली जनजीवनको प्रतिनिधिस्वरूप रहेको छ र यसमा नेपालको युगविशेषको ढुकढुकी, इच्छा र आकाक्षा आफ्नै विशुद्ध रूपमा टाँसिएर रहेको छ भनी कसैले भनेमा दुइ मत हुनेछैन। बगेको खोलाबाट दुइ चार अँजुली पानो निकाले झैं, लोकसाहित्यको अथाह स्रोत र अनन्त मोड भएको जन-जिभ्रोबाट टिपी अघिल्ला पाताहरूमा प्रस्तुत गरिएका केही लोकगीतबाट पनि यो कुरा स्पष्ट हुन्छ। वास्तवमा लोकसाहित्य-को महत्त्व पनि यसैमा निहित रहन्छ।

●